# आश्रम गतिविधि

१-४: आषाढ महिनामा सम्पन्न मासिक हवन कार्यक्रमहरु। ५-९: गत महिना सम्पन्न दिव्य गुरु महोत्सव।
१०-१५: परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूको १२ औं महाप्रयाण दिवसमा आयोजित कार्यक्रम।

● वर्ष ११ ● अङ्क १२ ● श्रावण २०६७ ● पूर्णाङ्क १३१

## सम्पर्क कार्यालयहरु


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी, फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट, फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल, फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बैँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौँ**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौँ**, सिमलटार
- **काठमाडौँ**, तीनकुने (मुनि भैरव)
- **ललितपुर**, गोदावरी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**

### पशुपतिनाथ विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## आश्रमका नियमित कार्यक्रमहरू

प्रत्येक साँझ ५ बजे गुरु आरती । प्रत्येक बृहस्पतिबार बिहान १० बजे गुरु पूजन । प्रत्येक अंग्रेजी महिनाको २१ तारीख दिव्य गुरु महोत्सव कार्यक्रम । प्रत्येक महिनाको पहिलो सोमबार पशुपति मृगस्थलीस्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, पहिलो मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधबार लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन तथा पहिलो बिहीबार पाटन कुम्भेश्वरस्थित वगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम सञ्चालन । विभिन्न चाडपर्वहरूमा विशेष कार्यक्रम । गोरक्ष निखिल वाणी आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको प्रकाशन । विभिन्न एफ.एम. स्टेशनहरूमार्फत् गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम सञ्चालन । समाजमा आध्यात्मिक शिक्षा लागू गराउनका लागि गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको सञ्चालन । तान्त्रिक ध्यानका विभिन्न चरणका कक्षाहरू । समय समयमा विशेष साधना कार्यक्रमहरू । प्राणप्रतिष्ठित तान्त्रिक सामग्रीहरूको वितरण । समस्या समाधानका लागि परामर्श सेवा । असाध्य रोगका लागि तान्त्रिक हिलिङको व्यवस्था ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग
ssk.org.np, info@ssk.org.np

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, काठमाडौं, नेपाल**
**फोन नं: ०१-४३८९१५४, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: gnv.org.np, Email: info@gnv.org.np

सर्वप्रथम त 'श्री शिव गोरक्ष महोत्सव'को पावनतम अवसरमा समस्त महानुभावहरुमा भौतिक एवं आध्यात्मिक उन्नति, प्रगति हुँदै जाओस् भनी परमपूज्य सद्‌गुरुदेवहरुसमक्ष हार्दिक प्रार्थना गर्दै सम्पूर्णमा सिद्धाश्रम शक्ति केन्द्रको तर्फबाट मङ्गलमय शुभकामना व्यक्त गर्दछौँ ।

मानवजीवन आफैमा दुर्लभ एवं बहुमूल्य जीवन मानिन्छ । तर पनि हामीले यस्तो दुर्लभ जीवनलाई बुझ्न सकेका हुँदैनौं । मानवजीवनमा सद्‌गुरु प्राप्तिलाई अहोभाग्य मानिन्छ । तर पनि गुरु प्राप्तिसँगै हाम्रो जीवनमा नयाँपन आएन भने, जीवनमा जोश, जाँगर, उत्साह, उमङ्ग आएन भने पक्कै पनि कहाँनिर गल्ती भयो भनेर हामीले हाम्रा कमजोरीहरु हटाउनु पर्ने हुन्छ । आफ्ना कमी-कमजोरी, न्यूनता नहटेसम्म आध्यात्मिक उन्नति सम्भव छैन, गुरु प्राप्ति सम्भव छैन । त्यसैले गुरु प्राप्तिसँग आफ्ना न्यूनता, राग, द्वेष, घमण्ड, अहंकार आदिलाई हटाउँदै सच्चा शिष्य बन्ने मार्गतर्फ अग्रसर होऔं, जीवनलाई धन्य बनाऔं ।

श्रावण महिनालाई हाम्रो धर्म, संस्कृतिमा भगवान् शिवको महिनाको रुपमा मनाइँदै आइएको पाइन्छ । त्यस्तै, सिद्धाश्रम शक्ति केन्द्रले पनि श्रावण महिनालाई 'श्री शिव गोरक्ष महोत्सव'को रुपमा मनाउँदै आइरहेको छ । गुरु गोरखनाथलाई शिव गोरक्षको रुपमा आदर, सम्मान गर्ने गरिन्छ । त्यसैले भगवान् शिवको १०८ अवतारमध्ये सर्वाधिक महत्त्वपूर्ण अवतारको रुपमा श्री शिव गोरक्ष स्वरुपलाई मानिन्छ । सम्पूर्ण मानव, देवता, योगी, महायोगी, ऋषिमुनि, नाथहरुका पनि महानाथ श्री शिव गोरक्ष सम्पूर्णका मूलाधार हुनुहुन्छ, सबैको श्रद्धा, भक्ति र विश्वासको केन्द्र हुनुहुन्छ, अनन्तकोटि ब्रह्माण्डका मालिक हुनुहुन्छ । गोरखकृपा, निखिलकृपा आशीर्वादका लागि श्रावण महिनाको आफ्नै विशिष्ट महत्त्व रहेकोले यस अवसरमा हुने दिव्यतम कार्यक्रमहरुमा सहभागी हुन सम्पूर्ण महानुभावहरुमा हार्दिक आमन्त्रण गर्दछौँ ।

यसपालिको पत्रिकालाई 'पशुपतिनाथ विशेष'को रुपमा निकालेका छौँ । सम्पूर्ण हिन्दुहरुका आराध्यदेव भगवान् पशुपतिनाथको महिमा, गरिमालाई सारा विश्वभरि फैलाउन नसक्नु हामी नेपालीहरुको, नेपाल सरकारको ठूलो कमजोरी हो । धार्मिक एवं आध्यात्मिक हिसाबले पनि नेपालको गरिमा सधैँ उच्च रहँदै आइरहेको छ । त्यसैले, नेपालका यस्ता धरोहरहरुलाई विश्वसामु उजागर गर्दै लैजान सके धार्मिक एवं आध्यात्मिक हिसाबले, आर्थिक हिसाबले पनि पर्यटनको माध्यमबाट नेपाल र नेपालीले धेरै फाइदा लिन सक्नेछन् । पशुपतिनाथको बारेमा सामान्य जानकारी दिने हिसाबले उहाँसम्बन्धी केही प्रसंगहरु मात्र यस अंकमा समावेश गरेका छौँ । त्यसैले उहाँसम्बन्धी अन्य विषयहरु मिलेमा भविष्यमा पनि समेट्दै लगिनेछ ।

अन्तमा, यस पत्रिका प्रकाशनको क्रममा भए गरेका सम्पूर्ण गल्ती, कमी-कमजोरीहरुका लागि परमपूज्य सद्‌गुरुदेवहरु र यहाँहरुसमक्ष पनि क्षमायाचना गर्दै आवश्यक सल्लाह, सुझावको अपेक्षा गर्दछौँ ।

जय गुरुदेव !

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ

**मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ। गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ। सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ। यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्‌गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ। गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–**

## परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

*वन्दे नारायणं देवं सद्‌गुरुं निखिलेश्वरं।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानव जीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ। आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३३ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो । वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो। आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यास जीवन बिताउनुभयो। त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो । संन्यास जीवनपश्चात् पुन: गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो। यसको लागि सयौं पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो। यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ **डा. नारायणदत्त श्रीमाली**को नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्‌गुरु आदिको संज्ञाले विभूषित हुनुभयो। आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो। हाल सद्‌गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ।

## श्री श्री महायोगी गुरु गोरखनाथ

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचरम्।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ। महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ । योग मार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो । यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ । गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ। श्रीमद्‌भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ। विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौँ हजारौँ वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ। यसबारे विभिन्न विद्वान्‌हरूले थुप्रै अनुसन्धान गरेका छन्। आमाको कोखबाट नभई आवश्यकता अनुसार आफै प्रकट हुनुहुने महायोगी अजर अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ। उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नैपर्दछ। नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ । नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो । नेपालमा मात्र नभएर विश्वभर उहाँको सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन्। आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ।

# सिद्धाश्रम शक्ति केन्द्र

## (आध्यात्मिक शक्ति अनुसन्धान संस्था)

सिद्धाश्रम शक्ति केन्द्र, आध्यात्मिक शक्ति अनुसन्धान संस्थाको स्थापना ०५६ वैशाख ८ गते भएको हो तथा विधिवत् दर्ता ०५६ वैशाख २३ गते भयो । परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरुरूपमा धारण गर्दै यो संस्था शुरुमा केही वर्ष काठमाडौँको कमलादीबाट सञ्चालन भयो । त्यसपछि बत्तीसपुतली, पुरानो बानेश्वर हुँदै संचालन भएको यस संस्थाको केन्द्रीय कार्यालय हाल बसुन्धरामा रहेको छ ।

समस्त भूमण्डललाई गोरक्ष निखिल ऊर्जाले आपूरित गर्दै गोरक्ष निखिल युग स्थापनार्थ अघि बढिरहेको यस संस्थाले विभिन्न आध्यात्मिक गतिविधिहरूलाई अघि बढाइरहेको छ । मुलुकभर विभिन्न सम्पर्क कार्यालयहरूमार्फत आफ्ना गतिविधिहरू अघि बढाइरहेको यस संस्थाले विभिन्न ठाउँमा स-साना एकाइहरूको गठन गरेर पनि समाजमा आध्यात्मिक गतिविधिलाई अघि बढाइरहेको छ । संस्थाका विभिन्न सम्पर्क कार्यालयहरूमा बिहीबारको गुरु पूजन, दिव्य गुरु महोत्सव, विभिन्न चाडपर्वमा पूजनादि कार्यक्रमहरू सम्पन्न भइरहेका छन् भने विदेशमा रहेका यससँग सम्बन्धित एकाइहरूले पनि आध्यात्मिक गतिविधिमार्फत विश्वमा आध्यात्मिक शीतलता छरिरहेका छन् ।

संस्थाले प्रत्येक महिना काठमाडौँ उपत्यकालगायत अन्य स्थानहरूमा रहेका विभिन्न शक्तिपीठ र मन्दिरहरूमा तान्त्रोक्त हवनहरू सञ्चालन गर्दै आइरहेको छ भने प्रत्येक वर्ष यस संस्थाले गोरखास्थित गोरख गुफामा श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा सवालाख रोट चढाउँदै आइरहेको छ । यसका अतिरिक्त कैयौं मन्त्र हवन साधना, तान्त्रोक्त साधना, ध्यान, महोत्सव आदिका कार्यक्रमहरू सञ्चालन गरिसकेको छ भने गोरक्ष निखिल वाणी मासिकलाई निरन्तररूपमा प्रकाशित गरिरहेको छ । एकातिर आध्यात्मिक पत्रिकामार्फत संस्थाले आध्यात्मिक गतिविधिलाई समाजसामु लगिरहेको छ भने अर्कोतिर गोरक्ष निखिल सन्देश नामक साप्ताहिक रेडियो कार्यक्रमबाट पनि यसले आफ्नो अभियानलाई तीब्र बनाइरहेको छ । समाजमा योग्य, सबल, चरित्रवान् नागरिकहरूको उत्पादनका लागि शैक्षिक मिशनअन्तर्गत गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम सञ्चालन गरिरहेको यस संस्थाका विभिन्न तह र तप्कामा रहेका कार्यकर्ताहरूका लागि मासिक प्रशिक्षण तथा तालिमको पनि व्यवस्था हुँदै आएको छ ।

हाल अ.ना.प. शैली अपनाएर अगाडि बढिरहेको यो संस्थाको सांगठनिक स्वरूपअन्तर्गत सम्पर्क कार्यालयहरूको सञ्चालन भइरहेको छ भने यसै शैलीभित्र क्षेत्रीय कार्यालयहरूको पनि विकास भइरहेको छ । संस्थाको विकास र विस्तार हुने क्रममा कतिपय सम्पर्क कार्यालयका आफ्नै भवन बनिसकेका छन् भने कतिपयमा भवनका लागि जग्गाको व्यवस्था भइसकेको छ । थुप्रै सम्पर्क कार्यालयहरूमा विभिन्न स्तरका ध्यानका कार्यक्रमहरूका अतिरिक्त परामर्श सेवालगायत तान्त्रिक हिलिङ्ग पनि सञ्चालन भइरहेका छन् । यसप्रकार यो केन्द्रले आध्यात्मिक युग निर्माणको दिशामा अग्रणी भूमिका निर्वाह गरिरहेको छ ।

# आत्मिक निवेदन

*आत्मीय पाठकवर्ग,*

*'गोरक्ष निखिल वाणी' पत्रिका यहाँहरुलाई कस्तो लागिरहेको छ? अनेक बाधा, अड्चन एवं समस्याहरुका बावजुद पत्रिकालाई निरन्तरता दिँदै प्रबुद्ध पाठकहरुको कसीमा आफूलाई घोट्दै शुद्धता एवं स्तरीयतामा क्रमशः वृद्धि गर्दै जाने हाम्रो संकल्प एवं प्रयास रहँदै आएको छ। भौतिकतामा चुर्लुम्म डुबेको आजको समाजमा एउटा आध्यात्मिक पत्रिकालाई नियमितता दिनु र आफ्नो खुट्टामा उभिन सक्ने बनाउनु भनेको निश्चय पनि असम्भवजस्तो लाग्दछ। तर परमपूज्य सद्गुरुदेवहरुको आशीर्वादले यो असम्भवलाई सम्भव बनाउने कार्य तपाईंहरुबाटै भइसकेको छ। पत्रिकालाई युगौं-युगसम्म जीवन्त राखी आउँदो पुस्तालाई हाम्रो आध्यात्मिक धरोहरको रुपमा हस्तान्तरण गर्ने जिम्मेवारी पनि तपाईं, हाम्रै काँधमा आएको छ।*

*प्रत्येक व्यक्ति स्वयं आध्यात्मिक पथमा अग्रसर भई आफ्नो परिवार, टोल, छिमेक, समाज, गाउँ, सहर, जिल्ला, अञ्चल हुँदै सम्पूर्ण देश अनि सम्पूर्ण विश्वलाई नै अध्यात्ममय बनाउने महान् अभियानलाई मूर्तरुप दिन पत्रिका सबैभन्दा सशक्त माध्यम बन्न सक्छ। अतः पत्रिका सदस्यता विस्तारको कार्यक्रममा यहाँहरुको सहयोगको अपेक्षा गर्दछौं।*

*पत्रिकाको बिक्री मूल्य रू. ३०।- मात्र भएकोले तपाईंले कम्तीमा दसवटा पत्रिका मगाएर आफ्ना नाता-गोता, छरछिमेकमा बाँड्न सक्नुहुन्छ। तपाईंको घर, टोल, छिमेक वा नातागोतामा कहीं पनि पूजा-आजा, हवन, विवाह, व्रतबन्ध, सप्ताह, जन्मदिन, मेला, पर्व, महोत्सव आदि हुँदैछन् भने त्यहाँ पत्रिकाको स्टल राखेर यसको महत्त्वबारे जानकारी गराउनुका साथै वार्षिक सदस्यताको लागि प्रेरित गर्न सक्नुहुन्छ।*

*यसका अलावा टाढा-टाढा रहेका आफ्ना नाता-गोता, मित्रजनलाई हुलाकमार्फत पत्रिका पठाउन सक्नुहुन्छ। यसो गर्दा आत्मिक सम्बन्ध अझ प्रगाढ हुन जान्छ।*

*यो पत्रिका यहाँहरुको आफ्नै भएकोले यसलाई फलाउने, फुलाउने र फैलाउने जिम्मा पनि यहाँहरुकै हो। यसैले, सम्पूर्ण पाठकहरुमा हाम्रो आत्मिक निवेदन छ– आफूलगायत कम्तीमा पाँचजना वार्षिक सदस्य बनाउने संकल्प आजकै दिनदेखि गरौं।*

*यहाँहरु सबैको सहयोगले पत्रिकाको सदस्य सङ्ख्या निरन्तररुपमा वृद्धि हुँदै जानेछ जसले गर्दा पत्रिकालाई अझ स्तरीय एवं आकर्षक बनाउन मद्दत मिल्नेछ भन्ने कुरामा हामी विश्वस्त छौं।*

*वार्षिक सदस्यताको लागि रु. ३५०।- (अक्षरेपी रु. तीन सय पचास मात्र) हामीलाई पठाउनुहोस्। त्यसपछिको बाँकी काम हामी गर्नेछौं।*

*अन्तमा, आत्मीय पाठकवर्गहरुमा विनम्र अनुरोध छ कि पत्रिकाको स्वयंले अध्ययन गरौं एवं आफ्नो परिवार तथा इष्टमित्रलाई पनि पढ्न अनुरोध गरौं। यसका अलावा अन्य पाँचजना व्यक्तिलाई पढाउने प्रयास गरौं।*

*संसारको सबैभन्दा ठूलो दान ज्ञान दान हो, तपाईंको सानो दानले कसैको जीवनमा नयाँ मोड आउन सक्छ, जीवनमा सदाबहार छाउन सक्दछ। त्यसैले परमपूज्य सद्गुरुदेवहरुको महान् योजनालाई मूर्तरुप दिँदै चरितार्थ गराउन आजदेखि गुरु कार्यमा सहभागी बनौं र यस योजनालाई आ-आफ्नो तरीकाबाट सहयोग गरौं।*

*पत्रिकाको बिक्री हाम्रो उद्देश्य होइन, अपितु परमपूज्य सद्गुरुदेवहरुको असीम अनुकम्पाले प्रत्येक जन-जनमा गोरक्ष निखिल ऊर्जाको सञ्चार गरी आध्यात्मिक युगको पुनः निर्माण गर्नु हो। अस्तु।*

# श्री शिव गोरक्ष महोत्सव २०६७

# हार्दिक आमन्त्रण

परमपूज्य सद्गुरुदेवहरुको कृपावश सिद्धाश्रम शक्ति केन्द्रले यस वर्ष पनि श्रावण महिनालाई 'श्री शिव गोरक्ष महोत्सव'को रुपमा विशेष कार्यक्रमहरुका साथमा मनाउने भएको छ। कार्यक्रममा सहभागी भई परमपूज्य सद्गुरुदेवहरुको कृपा, आशीर्वाद प्राप्त गर्दै आत्मोन्नतिको दिशामा अगाडि बढ्नुहुन सम्पूर्ण भक्तजन, साधक साधिकाहरुलाई हार्दिक आमन्त्रण गर्दछौं।

विस्तृत जानकारीको लागि सिद्धाश्रम शक्ति केन्द्रको नजिकको सम्पर्क कार्यालयमा सम्पर्क गर्नुहोला। महोत्सवअन्तर्गत सम्पन्न हुने सम्पूर्ण कार्यक्रमहरुमा **निःशुल्क** सहभागी हुन सकिनेछ। कार्यक्रमका लागि नगद तथा जिन्सी (हवनसम्बन्धी सामाग्रीहरु) सहयोग पनि खुला गरिएको छ।

## कार्यक्रमहरुः

- **दैनिक** हवन बिहान ६:०० बजेदेखि अपराह्न १:०० बजेसम्म।
- दैनिक हवनको पूर्णाहुतिपश्चात् रोट अर्पण।
- दैनिक साँझ ४:०० देखि ५:०० बजेसम्म भजनकीर्तन।
- प्रत्येक **सोमबार** रुद्राभिषेक (रुद्री) एवं साँझ दीपावली।
- प्रत्येक **मंगलबार** गुरु गोरखनाथका विभिन्न मन्दिरहरुमा रोट अर्पण।

## अनुरोध

- दैनिक ७ घण्टा अखण्ड हुने हवनमा प्रत्येक १-१ घण्टामा समूह परिवर्तन हुनेछ।
- आफूले हवन गर्न चाहेको दिन र समयमा आफ्नो स्थान सुरक्षित बनाउन अग्रिमरुपमा नाम दर्ता गराउनुहोला।

# आमन्त्रण

श्री पशुपतिनाथ बाबा (अन्नपूर्ण अखण्ड भण्डार) ज्यूबाट गुरु पूर्णिमा (२०६७ श्रावण २०) देखि जनै पूर्णिमा (२०६७ भाद्र ८) सम्म पशुपति क्षेत्र कैलाशमा एक मासव्यापी सवा करोड पार्थिव शिवलिङ्ग पूजन (काँचो माटोको) साथै शिव महापुराण वाचन, महारुद्राभिषेक, सवा करोड दीप प्रज्ज्वलन तथा भजनकीर्तन कार्यक्रम सम्पन्न हुने भएकोले श्रद्धालु समस्त देशवासीहरुलाई सहभागी हुन आमन्त्रण गरिन्छ।

– आयोजक समिति

# शुभकामना

आराध्यदेव भगवान् पशुपतिनाथको असीम कृपास्वरूप अन्नपूर्ण अखण्ड भण्डारबाट श्रावण महिनामा पशुपति क्षेत्रमा सवा करोड शिवलिङ्ग निर्माण, पूजन, शिव महापुराण वाचन, महारुद्राभिषेक, सवा करोड दीप प्रज्ज्वलन, भजनकीर्तनलगायतका कार्यक्रम आयोजना गरिएकोले उक्त कार्यक्रमको सफलताको लागि हार्दिक शुभकामना व्यक्त गर्दछौं। साथै, विश्वमा नै पहिलोपटक हुन लागेको यस्तो कार्यक्रममा सहभागी भई पुण्य आर्जन गर्नुहुन समस्त साधक साधिका तथा भक्तजनमा अनुरोध गर्दछौं।

## सिद्धाश्रम शक्ति केन्द्र नेपाल

# श्रावण महिना र शिव गोरक्ष महोत्सव

**जगत्त्राण दक्षं नमत्प्राण पक्षं**
**हटाकुष्ट योगं सदात्यक्त भोगम् ।**
**वियच्चारि संचारि सत्मंन्युदारं**
**सुगोरक्ष गोरक्षनाथं नताः स्म ॥**

अर्थात्, जो जगत्का प्राणीहरूलाई कृपापूर्वक रक्षा गर्नमा परमसमर्थ हुनुहुन्छ, आफ्ना भक्तहरूलाई प्राणमयी शक्तिले सम्पन्न गर्नुहुन्छ, जसले हठपूर्वक कठोर योगाभ्यास गरेर सिद्धि प्राप्त गर्नुभयो, जसले सदाका लागि जीवनका विषयभोग सुखलाई त्याग्नुभयो, जो खेचरी मुद्रामा निरन्तर तत्पर हुनुहुन्छ, जो परम उदार कारुणिक हुनुहुन्छ, उहाँ इन्द्रियजयी गोरक्षनाथलाई हामी प्रणाम गर्दछौं । धर्मको रक्षा गर्ने, पृथ्वीको रक्षा गर्ने, इन्द्रियको नियन्त्रण गर्ने केवल गोरक्ष हुनुहुन्छ । मानव, दानव, देवतालगायत सम्पूर्णका आराध्यदेव, सबैको रक्षा गर्ने गुरु गोरक्षनाथको प्रीतिको लागि सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक वर्षको श्रावण महिनालाई 'शिव गोरक्ष महोत्सव'को रूपमा मनाउँदै आइरहेको छ ।

श्रावण महिना शिवको महिना हो । यस महिनामा मानिसहरू भगवान् शिवको ठूलो भक्तिभावले पूजा, अर्चना गर्छन्, महिमा गाउँछन्, जप, व्रतादिबाट उहाँलाई प्रसन्न पार्न खोज्छन्, उहाँलाई खुशी बनाउन भक्तिभावपूर्वक अनेकौं सोपान अर्पण गर्छन् । आशुतोष भगवान् शिवलाई प्रसन्न पार्न अति सजिलो छ । सानो भक्तिभावले पनि आफ्ना भक्तको इच्छा, आकांक्षा पूरा गरिदिनुहुने भोलेनाथ श्रावण महिनामा गरिएका जप, तप, पूजा, पाठ, व्रतादिबाट अति प्रसन्न हुने शास्त्रमा बताइएको छ ।

भगवान् शिवले आफ्नो आत्मस्वरूपबाट गोरक्ष रूप लिनुभयो । त्यसैले गोरक्षलाई शिवगोरक्ष भनी सम्बोधन गरिएको छ । शिवपुराणको सप्तम अध्यायमा सृष्टिकर्ता ब्रह्माले श्री गोरक्षनाथलाई शिवको अवतार भनी वर्णन गर्नुभएको छ–

**शिवो गोरक्षरुपेण, योगशास्त्रं जु गोपह । यमाद्यङ गै र्यथास्थाने, स्थापिता योगिनो्पिच ॥**

भगवान् शिवले गोरक्षरूपमा योग र योगीहरूको रक्षा तथा सारा विश्वको कल्याणका लागि योगशास्त्रको सत्यता यम, नियम आदिद्वारा प्रमाणित गर्नुभएको छ । भगवान् शिवले आफ्नो गोरक्ष स्वरूपमा रहेर नै विविध लीलाहरू धर्नुभयो । उहाँलाई भगवान् शिवका १०८ अवतारमध्ये सबैभन्दा प्रमुख अवतारको रूपमा लिइन्छ । चारै युगमा क्रियाशील एउटै शक्ति छ भने त्यो हो गोरक्षशक्ति । शिवमा रहेका सम्पूर्ण सिद्धि, शक्तिहरू गोरक्षमा व्याप्त छन् भने श्री गोरक्षमा अन्तर्निहित शक्तिहरू श्री शिवमा छन् । भगवान् शिवलाई प्रसन्न पार्नु भनेको गोरक्षनाथलाई प्रसन्न पार्नु हो, शिवलाई पूज्नु भनेको श्री्री गोरक्षनाथलाई पुज्नु हो । सम्पूर्ण शिवतत्त्व गुरुरूपी गोरक्षनाथको माध्यम भएर मात्र प्रवाहित हुन्छन् । यसरी भगवान् शिव र गुरु गोखनाथ एक आपसमा पर्याय भएकोले संस्थाले श्रावण महिनालाई शिव गोरक्ष महोत्सवको

**भगवान् शिवलाई प्रसन्न पार्नु भनेको गोरक्षनाथलाई प्रसन्न पार्नु हो, शिवलाई पुज्नु भनेको श्रीी गोरक्षनाथलाई पुज्नु हो । सम्पूर्ण शिवतत्त्व गुरुरुपी गोरक्षनाथको माध्यम भएर मात्र प्रवाहित हुन्छन् ।**

रूपमा मनाउँदै आएको हो ।

श्री शिवगोरक्षको प्रीतिका लागि प्रत्येक वैशाखी पूर्णिमादेखि ११ दिनसम्म सिद्धाश्रम शक्ति केन्द्रले विगत सात वर्ष अघिदेखि गुरु गोरखनाथको चरणकमलमा सवालाख रोट अर्पण गरिरहेको छ । यस वर्षको जेठमा पनि यस महोत्सव भव्यरूपमा सम्पन्न भइसकेको छ । हामी माझ फेरि अर्को अवसरको रूपमा श्री गोरक्षनाथलाई प्रसन्न पारेर उहाँको आशीर्वाद थाप्ने महिना आएको छ श्रावणी पर्वको रूपमा श्रावण महिना । विगत कैयौं वर्षदेखि संस्थाले यस महिनामा श्री शिवगोरक्ष महोत्सव सम्पन्न गर्ने क्रममा विविध गतिविधि संचालन गरेको थियो । यस वर्षको श्री शिवगोरक्ष महोत्सव मनाउने क्रममा पनि संस्थाबाट प्रदत्त आध्यात्मिक गतिविधिहरूमा सहभागी भएर निरञ्जन, निराकार, निर्विकल्प, निरामय, अगम्य, अगोचर, अलक्ष्य, विश्वरूप, विश्वतेज, विश्वनाथ श्री श्री महोयोगी गुरु गोरखनाथको महिमा गाऔं, भक्ति गरौं । उहाँको कृपा, आशीर्वादको भागी बनौं । यसैमा सबैको कल्याण छ । यसैमा सबैको मुक्ति छ ।

जय गुरुदेव !

# पशुपति र लिङ्ग शब्दको रहस्य

भगवान् शंकरका अनेक नाममा पशुपति र लिङ्ग यी दुई नाम सर्वसाधारणको बुझाइमा कमै आउँछन् । पशुपति शब्दमाथि शिवपुराणको वायवीय संहिताको पूर्वखण्डमा यस्तो लेखिएको पाइन्छ–

**स पश्यति शरीरं तच्छरीरं तन्न पश्यति ।**
**तौ पश्यति परः कश्चित् तावुभौ तं न पश्यतः ॥**

**ब्रह्माद्याः स्थावरान्ताश्च पशवः परिकीर्तिताः ।**
**पशूनामेव सर्वेषां प्रोक्तमेतन्निदर्शनम् ॥**
**स एष बध्यते पाशैः सुखदुःखाशनः पशुः ।**
**लीलासाधनभूतो य ईश्वरस्येति सूरयः ॥**
**अज्ञो जन्तुरनीशोऽयमात्मनः सुखदुःखयोः ।**
**ईश्वरप्रेरितो गच्छेत् स्वर्गं वा श्वभ्रमेव वा ॥**
(अध्याय ५)

जीवले शरीरलाई देख्दछ, शरीरले जीवलाई देख्दैन । कसैले दुवैलाई आफूभन्दा पनि पर देख्छ, तर यी दुई उसलाई देख्दैनन् । ब्रह्मदेखि लिएर स्थावरसम्म सबै नै पशु कहलाइन्छन् । सबै पशुका लागि नै यो निदर्शन बताइएको छ । पशुहरू मायाको पासोमा बाँधिएका हुन्छन् र यिनीहरूले त सुख-दु:खरूपी चारा खान्छन् । विद्वान्हरू भगवान् (मदारी) लाई लीलाहरूका साधन हुन् भनेर मान्छन् । प्राणी ईश होइन अज्ञानी हुन्छन्, सुखात्मक र दु:खात्मक हुन्छन् तथा ईशको प्रेरणाले स्वर्ग र नरकमा जान्छन् । यसैले जीव 'पशु' हो र उसको 'पति' ईश हुन्, ब्रह्म हुन् । यसैले 'पशुपति' महेश्वरको नाम हो ।

'लिङ्ग' शब्दको साधारण अर्थ चिह्न वा लक्षण हो । सांख्यदर्शनमा प्रकृतिलाई, प्रकृतिबाट विकृतिलाई पनि 'लिङ्ग' बताइएको छ । देवचिह्नको अर्थमा 'लिङ्ग' शब्द भगवान् शिवको नै लिङ्गको लागि आउँछ र प्रतिमाहरूलाई मूर्ति भनिन्छ । यो भन्नुका कारण यो हो कि अरूको आकार मूर्तिमान्को ध्यानअनुसार हुन्छ तर लिङ्गमा आकार वा रूपको उल्लेख छैन । यो चिह्न मात्र हो र त्यो पनि पुरुषको जननेन्द्रियजस्तो छ, जसलाई लिङ्ग भनिन्छ । स्कन्दपुराणमा 'लयनाल्लिङ्गमुच्यते' बताइएको छ, जसको अर्थ लय वा प्रलय हुन्छ । यसैले त्यसलाई लिङ्ग भनिन्छ । प्रलयको अग्निमा सबै भस्म भएर शिवलिङ्गमा समाहित हुन्छन् । वेद-शास्त्रादि पनि लिङ्गमा नै लीन हुन्छन् । फेरि सृष्टिको आदिमा लिङ्गबाट नै सबै प्रकट हुन्छन् । अत: 'लय'बाट नै लिङ्ग शब्दको उद्भव उचित देखिन्छ । जसबाट लय वा प्रलय हुन्छ र उसैमा सम्पूर्ण विश्वको लय हुन्छ । यो एउटा संयोगको कुरा हो कि 'लिङ्ग' शब्दको अनेकौं अर्थमा लोकप्रसिद्ध अर्थ अश्लील हो । वैदिक शब्दको यौगिक अर्थ लिनु नै उचित हुन्छ । यौगिक अर्थमा कुनै अश्लीलता हुँदैन । यसबाहेक अश्लीलता त प्रसंगले गर्दा आउँछ नै । विषयात्मक वर्णनमा जुन अश्लील र अनुचित देखिन्छ, त्यही वैज्ञानिक एवं आध्यात्मिक वर्णनमा श्लील र समुचित हुन जान्छ । पशुपति र 'लिङ्ग' शब्दको पनि यही अवस्था देखिन्छ ।

लिङ्गाचैनमा अश्लीलताको भावको कल्पना परम मूर्खता, परम नास्तिकता र घोर अनभिज्ञता हो ।

हाम्रो देशमा प्राय: सर्वत्र पार्थिव-पूजा प्रचलित छ । तर विशेष स्थानहरूमा पाषाणमय शिवलिङ्गको पनि स्थापना भएको पाइन्छ । यी स्थावर मूर्तिहरू हुन् । वाणलिङ्ग वा सुन चाँदीका स-साना लिङ्गलाई जङ्गम भनिन्छ । यसलाई प्राचीन पाशुपत-सम्प्रदायहरू एवं आजकालको लिङ्गायत सम्प्रदायहरूले पूजाको व्यवहारमा ल्याउनका लागि आफूसँगै लिएर हिँड्छन् वा पाखुरा र घाँटीमा बाँधेर राख्छन् ।

लिङ्ग विविध द्रव्यहरूबाट बनाइन्छन् । गरुडपुराणमा यसको राम्रो वर्णन पाइन्छ । यहाँ संक्षेपमा वर्णन गरिन्छ–

१) 'गन्धलिङ्ग' दुई भाग कस्तूरी, चार भाग चन्दन र तीन भाग कुंकुमबाट बनाइन्छ । शिवसायुज्यार्थ यसको अर्चना गरिन्छ ।

२) 'पुष्पलिङ्ग' विविध सौरभमय फूलहरूबाट बनाएर पृथ्वीको आधिपत्यलाभका लागि पूजिन्छ ।

३) 'गोशकृल्लिङ्ग' स्वच्छ कपिलवर्णको गोबरबाट बनाएर पूज्नाले ऐश्वर्य प्राप्त हुन्छ । तर जसको लागि यो बनाइन्छ, ऊ मर्दछ । माटोमाथि पोखिएको गोबर वर्जित छ ।

४) 'रजोमयलिङ्ग' रजबाट बनाएर पुज्नेलाई विद्याधरत्व र त्यसपछि शिवसायुज्य प्राप्त हुन्छ ।

५) 'यवगोधूमशालिजलिङ्ग' जौ, गहुँ, चामल र आटाको बनाएर श्रीपुष्टि र पुत्रलाभका लागि पुजिन्छ ।

६) 'सिताखण्डमय' लिङ्गबाट आरोग्य प्राप्त हुन्छ ।

७) 'लवणजलिङ्ग' हरताल, त्रिकटुलाई लवणमा मिलाएर यस्तो शिवलिङ्ग बन्दछ । यसबाट उत्तम वशीकरण हुन्छ ।

८) 'तिलपिष्टोत्थलिङ्ग'ले अभिलाषा सिद्ध गर्दछ । यस्तै–

९–१२) 'तुषोत्थलिङ्ग' मारणशील हुन्छ, 'भस्ममयलिङ्ग' सर्वफलप्रद हुन्छ, 'गडोत्थलिङ्ग' प्रीति बढाउने हुन्छ र 'शर्करामयलिङ्ग' सुखप्रद हुन्छ ।

१३-१४) 'वंशाङ्कुरमयलिङ्ग' वंशकर हुन्छ, 'केशास्थिलिङ्ग' सर्वशत्रुनाशक हुन्छ ।

१५-१७) 'द्रुमोद्भूतलिङ्ग' दारिद्र्यकर, 'पिष्टमयं' विद्याप्रद र 'दधिदुग्धोद्भवलिङ्ग' कीर्ति, लक्ष्मी र सुख दिने हुन्छ ।

१८-२१) 'धान्यज' धान्यप्रद, 'फलोत्थ' फलप्रद, 'धात्रीफलजात' मुक्तिप्रद, 'नवनीतज' कीर्ति र सौभाग्य दिने हुन्छ ।

२२-२७) 'दूर्वाकाण्डज' अपमृत्युनाशक 'कर्पूरज' मुक्तिप्रद, 'अयस्कान्तमणिज' सिद्धिप्रद, 'मौक्तिक' सौभाग्यकर, 'स्वर्णनिर्मित' महामुक्तिप्रद, 'राजत' भूतिवर्धक हुन्छ ।

२८-३६) 'पित्तलज' तथा 'कांस्यज' मुक्तिप्रद, 'त्रपुज', 'आयस' र 'सीसकज' शत्रुनाशक हुन्छन् । 'अष्टधातुज' सर्वसिद्धिप्रद, 'अष्टलौहजात' कुष्ठनाशक, 'वैदूर्यज' शत्रुदर्पनाशक, र 'स्फटिकलिङ्ग' सर्वकामप्रद हुन्छ ।

तर तामा, सीसा, रक्तचन्दन, शङ्ख, काँस, फलाम यी द्रव्यहरूबाट बनेका लिङ्गको पूजा कलियुगमा वर्जित छ । पारोको शिवलिङ्ग विहित छ र ऐश्वर्यदायक हुन्छ ।

लिङ्ग बनाएर त्यसको संस्कार पार्थिव लिङ्गलाई छोडेर अन्य सबै लिङ्गका लागि चाहिन्छ । स्वर्णपात्रमा दूधमा डुबाएर तीन दिनसम्म राखेर पुन: 'त्र्यम्बकं यजामहे०' आदि मन्त्रले स्नान गराएर वेदीमा पार्वतीलाई षोडशोपचारले पूजा गर्नु उचित हुन्छ । फेरि पात्रबाट उठाएर लिङ्गलाई तीन दिनसम्म गङ्गाजलमा राख्नुपर्छ । फेरि प्राणप्रतिष्ठा गरेर स्थापना गरिन्छ ।

पार्थिव लिङ्ग बनाउँदा एक वा दुई तोला माटो लिएर बनाइन्छ । ब्राह्मणले सेतो, क्षत्रीयले रातो, वैश्यले पहेँलो र शूद्रले कालो माटोले पार्थिव लिङ्ग बनाउँछन् । तर जहाँ अव्यवहारिक हुन्छ, त्यहाँ जस्तोसुकै माटोले पनि बनाउने विधान छ ।

लिङ्ग साधाणत: अङ्गुष्ठ-प्रमाणका बनाइन्छन् । पाषाणादिका लिङ्ग मोटा तथा ठूला बनाइन्छन् । लिङ्गको दुई गुणा वेदी र त्यसको आधा योनिपीठ बनाउनुपर्छ । लिङ्गको लम्बाई कम भएमा शत्रु वृद्धि हुन्छ । योनिपीठबिना वा मस्तकादि अङ्गबिना लिङ्ग बनाउनु अशुभ हुन्छ । पार्थिवलिङ्ग आफ्नो बूढी औँलाको एक खण्ड (प्रत्येक औँलामा तीन खण्ड हुन्छन्) बनाउनुपर्दछ । लिङ्ग सुलक्षण हुनुपर्दछ । अलक्षण अमङ्गलकारी हुन्छ ।

लिङ्ग मात्रको पूजामा पार्वती-परमेश्वर दुवैको पूजा हुन जान्छ । लिङ्गको मूलमा ब्रह्मा, मध्यदेशमा त्रिलोकीनाथ विष्णु र माथि प्रणवाख्य महादेव स्थित हुनुहुन्छ । वेदी महादेवी हुनुहुन्छ र लिङ्ग महादेव हुनुहुन्छ । अत: एउटा लिङ्गको पूजामा सबैको पूजा हुन जान्छ (लिङ्गपुराण) ।

पारद लिङ्गको सबैभन्दा अधिक महिमा छ । 'पारद' शब्दमा प= विष्णु, आ=कालिका, र=शिव, द=ब्रह्मा यसरी सबै स्थित हुनुहुन्छ । पारदबाट बनाइएका लिङ्गको पूजाबाट, जुन जीवनमा एकपटक मात्रै पनि गरिएको किन नहोस्, धन, ज्ञान, सिद्धि र ऐश्वर्य प्राप्त हुन्छ ।

जय गुरुदेव !

ब्रह्मदेखि लिएर स्थावरसम्म सबै नै पशु कहलाइन्छन् । सबै पशुका लागि नै यो निदर्शन बताइएको छ । पशुहरु मायाको पासोमा बाँधिएका हुन्छन् र यिनीहरुले त सुख-दुःखरुपी चारा खान्छन् । विद्वान्हरु भगवान् (मदारी) लाई लीलाहरुका साधन हुन् भनेर मान्छन् । प्राणी ईश होइन अज्ञानी हुन्छन्, सुखात्मक र दुःखात्मक हुन्छन् तथा ईशको प्रेरणाले स्वर्ग र नरकमा जान्छन् । यसैले जीव ...पशु' हो र उसको 'पति' ईश हुन्, ब्रह्म हुन् । यसैले 'पशुपति' महेश्वरको नाम हो ।

राष्ट्रदेव

# पशुपतिनाथ

'पशुपतिनाथको मन्दिर विश्वविख्यात् छ', परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीको मुखारविन्दबाट निस्केको यस उद्गारजस्तै नेपालमा रहेको आराध्यदेव श्री पशुपतिनाथको मन्दिर नेपालमा मात्रै होइन, विश्वमै परिचित छ, प्रख्यात् छ, विख्यात् छ। यसले नेपाललाई विश्वसामु चिनाएको छ, नेपालीको शिर उच्च गरेको छ।

श्री पशुपतिनाथको मन्दिर पन्ध्रौं शताब्दीमा प्रताप मल्लले मर्मत गराएको र धेरै देवदेवीहरूको मूर्ति स्थापना गरेको कुरा वंशावलीहरूमा पाइन्छ। राजा शिवसिंह (सिंहदेव) मल्ल काठमाडौंको राजगद्दीमा बसेपछि यिनको राज्यकालमा पशुपति क्षेत्रमा धार्मिक, सांस्कृतिक दृष्टिले धेरै काम र सुधार भएका सन्दर्भहरू वंशावलीहरूमा उल्लेख भएका छन्। यिनको पालामा पशुपतिमा सुनको छाना हाल्ने, चाँदीको कमल चढाउने काम भएको थियो। यिनले बोलाएका शंकराचार्यले नेपालमा आएर शिवदेवका छोराहरूलगायत धेरैलाई शिक्षा दिए। यसप्रकार प्राप्त भएको आम्दानीबाट उनले पशुपति मन्दिरको जीर्णोद्धार गरेका थिए। शिवसिंहकै पालामा

योग्य र बुद्धिमान् ठहऱ्याई दक्षिणबाट पशुपतिमा आएर बसेका नित्यानन्द नामक संन्यासीलाई पशुपतिनाथको मूल पुजारीमा नियुक्त गरिएको थियो । मूल पुजारी स्वामी नित्यानन्दको सुझाव र सल्लाह अनि प्रेरणाबाट रानी गंगादेवी मल्लले तीन तल्ले छानाले बनेको भगवान् पशुपतिनाथको मन्दिरलाई एक तल्ला भत्काई दुईवटा छाना भएको मन्दिर बनाइन् । मन्दिरको छानालाई राम्रोसँग निर्माण गरी सुनको गजूर बनाई त्रिकोणाकार देवालय तथा प्राङ्गण बनाई गजूर चढाएको वंशावलीमा उल्लेख छ। त्रिकोणाकार इँटाका केही अंश आज पनि पाइन्छन् । देवमाला वंशावलीअनुसार पशुपतिनाथको चरणोदक वाग्मतीमा पर्ने गरी ब्रह्मनालको निर्माण र नाल बनाउने कार्य भएको सम्बन्धमा इतिहासविद्हरूको अध्ययनले प्रष्ट पार्छ । वंशावलीमा उल्लेख भएअनुसार पशुपतिनाथको मन्दिर बनाएको सम्वत् ७०५ (वि.सं. १६४१) हो भन्ने उल्लेख छ । मध्यकालीन राजा र प्रजा सबैको देवदेवीप्रति असीम श्रद्धा, भक्ति र धार्मिक विश्वास भएका कारण देवदेवीको भाकल गर्ने, विशेष अनुष्ठान, पुरश्चरण आदि गराउने प्रचलन थियो । सोही क्रियाअनुसार भगवान् पशुपतिनाथको मन्दिर समय परिस्थितिअनुसार किराँत, लिच्छवि, मल्ल तथा शाहकालीन राजाको पालामा मर्मत सुधार भई महत्त्वपूर्ण विषयवस्तुको निर्माण एवं परम्परा शुरु भएको अनुसन्धानबाट थाहा हुन्छ ।

नेपालमा लिच्छविकालमा शिखर शैलीका मन्दिरहरू बनाउने चलन थियो । तर यसै युगमा तल्ले शैलीका मन्दिरहरू पनि निर्माण भएको उल्लेख त्यस युगका शिलालेखहरूले गरेका छन् । सामान्यतया तल्ले शैलीका मन्दिरमा अत्यधिक मात्रामा ईंटा, काठ आदिको प्रयोग गरिएको हुन्छ । एन.आर. वनर्जीले लिच्छविकालसम्म पनि पशुपतिनाथ मन्दिर शिखर शैलीमा रहेको एवं ई. ८७९ मा यसलाई तल्ले शैलीमा परिणत गरिएको बताएका छन् ।

गर्भगृहको मध्यभागमा कृष्ण वर्णको, चार दिशामा चार मुख भएको र ऊर्ध्वमुख कल्पना गरिने मस्तक भाग भएको शिलामय लिङ्ग स्थापित छ । यो लिङ्ग शालिग्राम शिला हो भन्ने अनुश्रुति पाइन्छ र हाम्रा प्राचीन वंशावलीहरूको कथनअनुसार भगवान् पशुपतिनाथको अनादि ज्योतिर्लिङ्गमाथि यो लिङ्ग अवस्थित छ ।

शिवका अष्टमूर्तिमध्ये पृथ्वी, जल, तेज, वायु, आकाश रूप शिवका पञ्चवक्त्रमा परिकल्पना गरिन्छ र अन्य सूर्य, सोम, यजमानरूप यसै मूर्तिमा अन्तर्निहित छन् । भगवान् पशुपतिनाथको वर्तमान लिङ्गमा चार दिशामा चार मुख पर्ने गरी अङ्कन गरिएको छ । सद्योजात, तत्पुरुष, वामदेव, अघोर, ईशान समेत पाँच मुख छन् । लिङ्गपुराणअनुसार २९ औं श्वेतलोहित कल्पमा सृष्टिको निम्ति ब्रह्माजीले ध्यान गर्दा श्वेतलोहित वर्णको बालकको प्रादुर्भाव भयो जसलाई सद्योजातरूप शिव भनेर ब्रह्माले चिन्नुभयो भनिएको छ । यस्तै, तीसौं रक्त नामक कल्पमा रक्त वर्णका वामदेव, पीत वर्णका तत्पुरुष, नीलाभ अघोर, दक्षिणमुख शिव उत्पन्न हुनुभयो ।

विश्वमा शिवका ज्योतिर्लिङ्ग जतिसुकै भए पनि बाह्र लिङ्गलाई नै प्रमुखरुपमा लिने गरिन्छ । द्वादश शिवलिङ्गको रुपमा प्रसिद्ध ज्योतिर्लिङ्गहरुझैं पशुपतिनाथको महिमा उच्च छ । बाह्र ज्योतिर्लिङ्गको दर्शन गरेपश्चात् पशुपतिनाथको दर्शन गर्ने परम्परा रहेको छ । यस विषयमा शिवपुराणमा पनि उल्लेख गरिएको छ । पशुपतिनाथको सम्बन्धमा हिमवत्खण्ड नेपाल माहात्म्यमा धेरै वर्णन पाइन्छन् ।

**गर्भगृहको मध्यभागमा कृष्ण वर्णको, चार दिशामा चार मुख भएको र ऊर्ध्वमुख कल्पना गरिने मस्तक भाग भएको शिलामय लिङ्ग स्थापित छ । यो लिङ्ग शालिग्राम शिला हो भन्ने अनुश्रुति पाइन्छ र हाम्रा प्राचीन वंशावलीहरुको कथनअनुसार भगवान् पशुपतिनाथको अनादि ज्योतिर्लिङ्गमाथि यो लिङ्ग अवस्थित छ ।**

ऊर्ध्ववक्त्र शिव ईशानरूप मानिन्छ ।

वर्तमान पशुपति मन्दिरको भूमिको जग हातको परिमाणले चौँतीस हात नौ अंगुल र खास मन्दिरको पेटीमाथिको परिधि बत्तीस हात नौ अंगुल लम्बाइ-चौडाइ छ । अनुसन्धानकर्ता डा. टण्डनका अनुसार यो नाप १५३६/१५३६ से.मी. छ । यसलाई हातको परिमाणमा भन्ने हो भने ३३ हात र करिब २३ अंगुल जति हो । पशुपतिनाथको मन्दिरको उचाई ५१ हात २० अंगुल छ ।

ठकुरीवंशी राजा राघवदेवले नेपाल संवत्को प्रारम्भ गर्नुको कारणमा डा. डिल्लीरमण रेग्मीले 'त्यसबेला ठूलो महामारी फैलेको र त्यसबाट मुक्ति पाउन पशुपतिमा पूजा यज्ञादि गरिएपछि सो महामारी रोकिएको हुँदा त्यसै दिनको सम्झनामा नेपाल संवत् चलेको हुन सक्ने अड्कल गरेका छन् ।[1] यस सम्बन्धमा इतिहासकार धनवज्र बज्राचार्यले पशुपतिनाथलाई विभिन्न रूपले सम्मान गर्ने प्राचीन परम्पराअनुसार नै राघवदेवले पशुपतिनाथको सम्मानार्थ नेपाल संवत् चलाएको मानेका छन् ।[2]

**पशुपतिनाथ नेपालमा हुनुको गौरव**

विश्वमा शिवका ज्योतिर्लिङ्ग जतिसुकै भए पनि बाह्र लिङ्गलाई नै प्रमुखरूपमा लिने गरिन्छ। द्वादश शिवलिङ्गको रूपमा प्रसिद्ध ज्योतिर्लिङ्गहरूझैं पशुपतिनाथको महिमा उच्च छ। बाह्र ज्योतिर्लिङ्गको दर्शन गरेपश्चात् पशुपतिनाथको

महाशिवरात्रि पर्व नेपालीहरुका लागि मात्र होइन, शिवका सबै उपासकहरुका लागि पनि महोत्सव हो । यस महोत्सवमा पशुपति क्षेत्रमा नेपालभन्दा बाहिरका हिन्दू धर्मावलम्बीहरु, जोगी, सिद्ध, सन्त, संन्यासीहरु वैष्णव तथा वैरागी, उदासी मण्डलीहरुको पनि ठूलो भीड लाग्छ । जोगी, साधु, संन्यासी, नागा, वैरागी, उदासी, नाथपन्थीहरु आ-आफ्नो देवता भएको ठाउँमा बस्छन् भने तिनीहरुका लागि धूनी-पानी-वासका साथै भोजनको लागि चामल, दाल, घिउ, पिठो, नून, बेसार, चिनी, चिया आदिको व्यवस्था तत्तत् स्थानका महन्त, पूजारीहरुबाट हुन्छ । आवश्यक खर्च भने गुठी संस्थानबाट बेहोरिन्छ ।

एकादशीदेखि औंसीसम्मको खाना खर्च, धूनी-पानीको खर्च वहन गरी बिदा हुने साधु-संन्यासीका लागि दक्षिणास्वरुप नगद, कम्बल, लोटा, कमण्डलु, मृगचर्म, बाघाम्बर र कपडाहरु साधुहरुलाई वितरण गरिन्छ । पशुपतिनाथको प्राङ्गण वरिपरि बस्ने नागा साधुहरुलाई धूनी, पानी, हलुवा-पुरी, फलफूल, खीर, पैंडादि गुठी संस्थानबाट नै तयार गरी बाँडिन्छ ।

महाशिवरात्रिको दिन भगवान् पशुपतिनाथको चारै प्रहर पूजा हुन्छ । शुरुमा पाँच बजेतिर राष्ट्रप्रमुखबाट श्रीपशुपतिनाथको पूजा हुन्छ र त्यसपछिका प्रहर प्रहरमा हुने पूजा पूजारीहरुबाट सम्पन्न हुन्छ । बाहिरबाट आउने यात्रीहरुको दर्शन पूजनको निम्ति श्रद्धालु भक्तजनहरुको दिनरात भीड लागिरहन्छ । शान्ति, सुरक्षा र अन्य व्यवस्थाको रेखदेख सरकारी पक्षबाट गरिन्छ । त्यसमा हुने खर्च भने सबै गुठी संस्थानबाट नै बहन हुन्छ । परापूर्वदेखि नै राष्ट्रले बेहोर्दै आएको खर्च गुठी संस्थानबाट गरिन्छ ।

वंशावलीअनुसार राजा प्रतापमल्ल एकदिन कामवासनाले अभिभूत हुन पुगे । उनले एकजना कन्यालाई गमन गरे यसबाट उक्त कन्याको मृत्यु भयो । पापको प्रायश्चितका लागि उनी केही समय बुढानीलकण्ठमा गई बसेका थिए । त्यहाँ रहँदा उनलाई रोग लाग्यो । त्यसपछि पशुपतिमा आएर तीन महिनासम्म प्रायश्चित गर्दै बस्न लागे । त्यसैबेला आर्यघाटको निर्माण गर्नुको साथै पूर्वतर्फको बाग्मती नदीदेखि पर्खाल उठाएर घर बनाए । त्यसैगरी पशुपतिथनाथका मन्दिर परिसर दक्षिणपट्टि १ सय आटकोटि लिङ्गका साथै बीच भागमा मन्दिरको पनि निर्माण गरे । सोही १ सय आठ शिवलिङ्गलाई पशुपतिनाथ दर्शन गर्न आउने श्रद्धालु भक्तजनहरुले घुम्ने प्रचलन रहेको छ ।

**शिवका अष्टमूर्तिमध्ये पृथ्वी, जल, तेज, वायु, आकाश रुप शिवका पञ्चवक्रमा परिकल्पना गरिन्छ र अन्य सूर्य, सोम, यजमानरुप यसै मूर्तिमा अन्तर्निहित छन् । भगवान् पशुपतिनाथको वर्तमान लिङ्गमा चार दिशामा चार मुख पर्ने गरी अङ्कन गरिएको छ । सद्योजात, तत्पुरुष, वामदेव, अघोर, ईशान समेत पाँच मुख छन् ।**

दर्शन गर्ने परम्परा रहेको छ । यस विषयमा शिवपुराणमा पनि उल्लेख गरिएको छ। पशुपतिनाथको सम्बन्धमा हिमवत्खण्ड नेपाल माहात्म्यमा धेरै वर्णन पाइन्छन् ।

पशुपति क्षेत्र नै यस्तो क्षेत्र हो जहाँ तेत्तीसकोटि देवीदेवताहरू विराजमान हुनुहुन्छ । यो नै यस्तो पावन भूमि हो जहाँ भगवान् शिवको आत्मरूप योगेश्वर गोरक्षनाथ विराजित मृगस्थली रहेको छ । अत्यन्तै दिव्य र चैतन्य यस ठाउँमा भगवान् शिवका १०८ अवतारमध्ये प्रमुख अवतार श्री श्री महायोगी गुरु गोरखनाथको पीठ रहेको छ । माथितिर आत्मरूप र तलतिर ज्योतिर्लिङ्गमा विराजमान रहेर उनै शिवले यस पशुपति क्षेत्रलाई अति नै चैतन्य, दिव्य बनाउनुभएको छ । यही दिव्यता नै हाम्रो गौरव हो, यही चैतन्यता नै हामो अहोभाग्य हो ।

यस दिव्य एवं पुण्य भूमिमा आएर आफ्नो पुण्यलाई बढाउने अवसर हामीले पाएका छौं । हामी नै यस्ता सौभाग्यशाली भएका छौं कि हाम्रै देशमा आएर देवाधिदेव भगवान् शिव बाह्र ज्योतिर्लिङ्गभन्दा पनि प्रमुख स्वरूप र अर्को गोरक्ष स्वरूपमा स्थित भएर पशुपति क्षेत्रमा रहनुभएको छ। कंचन, निर्मल र शुद्ध यस ठाउँमा उहाँको अवस्थितिले ठूलो रहस्य बोकेको छ, यहाँ विराजमान तेत्तीसकोटि देवदेवीहरूको सान्निध्य पनि ठूलो रहस्यको विषय भएको छ । यस रहस्यलाई चिर्न त हामीले नै पहल गर्नुपर्छ, हामी नै तत्पर हुनुपर्छ ।

हाम्रो तत्परता भनेको यस क्षेत्रको भ्रमण हो, रमण हो । हाम्रो पहल भनेको यस क्षेत्रको दिग्दर्शन हो, स्पर्श हो । जति जति हामीले यहाँ विराजमान भगवान् पशुपतिनाथको, जगत्पालक श्री शिवगोरक्ष र अन्य देवीदेवताहरूको भक्तिभावपूर्वक याचना गर्दछौं, पूजनादि गर्दछौं त्यति नै रहस्य उजागर हुँदै जानेछ । यही रहस्य नै विश्वलाई प्रसादका रूपमा हामीले बाँड्न सक्नेछौं । यही प्रसाद खाएर सारा मानिसहरूले भुक्ति मुक्तिको स्वाद लिन पाउनेछन् किनकि भुक्ति मुक्तिको अनन्त स्रोत श्री पशुपतिनाथ हुनुहुन्छ ।

हाम्रै देशमा आएर देवाधिदेव भगवान् शिव बाह्र ज्योतिर्लिङ्गभन्दा पनि प्रमुख स्वरुप र अर्को गोरक्ष स्वरुपमा स्थित भएर पशुपति क्षेत्रमा रहनुभएको छ । कंचन, निर्मल र शुद्ध यस ठाउँमा उहाँको अवस्थितिले ठूलो रहस्य बोकेको छ, यहाँ विराजमान तेत्तीसकोटि देवदेवीहरुको सान्निध्य पनि ठूलो रहस्यको विषय भएको छ ।

### पशुपति क्षेत्र र पर्यटन वर्ष

नेपालले सन् २०११ लाई पर्यटन वर्षको रूपमा मनाउँदैछ। यो हामी सबै नेपालीहरूका लागि खुशीको कुरा हो। यस सन्दर्भमा पशुपतिनाथ र पशुपति क्षेत्रलाई मूल पर्यटन थलोको रूपमा लिन सकिने कुरामा पनि अध्ययन हुनु आवश्यक छ। वृहत् पशुपति क्षेत्रलाई धार्मिक क्षेत्रबाट पर्यटन गन्तव्य बनाउन सके हामी नेपाली र नेपालको पनि हित हुने कुरामा सोच्न ढिला गर्न नहुने भइसकेको छ। पशुपति क्षेत्रमा रहेका मन्दिर, पीठ, मूर्ति र अन्य कुराहरू अति नै दर्शनीय छन्। यहाँका प्रत्येक ठाउँलाई विशेष किसिमले प्रचारप्रसार गर्न सकेमा ठूलो मात्रामा पर्यटकहरूको आगमन नेपालतिर मोड्न सकिने कुरामा कुनै शंका रहन्न । हामी नेपालीहरू पनि यस क्षेत्रमा आएर आफ्ना आराध्यदेवहरूको दर्शन, पूजन गर्ने गर्नु पनि आन्तरिक पर्यटनलाई बढावा दिनु हो। यस कुरालाई पनि हामीले हृदयंगम गर्नु जरुरी छ । बाहिरबाट आउने पर्यटकहरूलाई आवश्यक सुविधाहरूको बन्दोबस्त गर्नु, उनीहरूलाई उचित आदर-सत्कार गर्नु पनि अत्यावश्यक हुन्छ। पशुपति क्षेत्रको सफाइमा ध्यान दिनु, यहाँ हुने विकृतिहरूलाई हटाउनु, आवश्यक सुधार र जीर्णोद्धारतिर ध्यान दिनु पनि उत्तिकै आवश्यक छ। यसतर्फ सम्बन्धित निकायको मात्र आशा नगरी प्रत्येक नेपालीले, प्रत्येक संघ संस्थाले तन, मन, धनले सहर्ष लाग्ने बेला आइसकेको छ । पशुपति क्षेत्रलाई राष्ट्रिय र अन्तर्राष्ट्रिय रूपमा जति प्रचारप्रसार गर्नुपर्ने हो त्यसको ज्वलन्त नमुना अब देखाउने बेला आएको छ । विश्व जनसमुदायलाई देवाधिदेव पशुपतिनाथको आशीर्वाद, कृपा, अनुकम्पा दिलाउने बेला आएको छ। जय गुरुदेव !

*सन्दर्भग्रन्थहरू :*

*१. डी.आर. रेग्मी मेडिएभल नेपाल भोलूम १, पृ ५६ ।*

*२. धनबज्र बज्राचार्य–'मध्यकालका शुरुका केही अभिलेख' कन्ट्रिब्यूशन्स टु नेपलीज स्टडीज भोलुम ५, नं. १, पृ. १०५ ।*

### बहुमूल्य दुर्लभ रत्नहरू

**भगवान् पशुपतिनाथको मन्दिरभित्र विशेष धार्मिक, सांस्कृतिक महत्त्वको रुपमा रहेका दुर्लभ रत्नहरु पशुपतिनाथमा पूजाका अङ्गस्वरुप राखिएका छन् । तीर्थालु भक्तजनले पशुपतिनाथको विशेष पूजाका लागि चाहिने राशि पशुपति कोषमा बुझाएमा यी बहुमूल्य वस्तुहरु दर्शन गर्ने अवसर पाउँछन् । मूल भट्टले मात्र यसरी दर्शन गराउन पाउने परम्परा हालसम्म रहँदै आएको छ ।**

**एकमुखी रुद्राक्ष भगवान् शिवको अति नै प्रिय वस्तु मानिन्छ । पशुपतिनाथको मन्दिरभित्र एकमुखे रुद्राक्ष पनि सुरक्षित रुपमा रहेको छ । एकमुखी रुद्राक्षलाई भगवान् शिवको प्रतिरुपकै रुपमा भक्तजनहरुले लिने गर्छन् । पशुपतिको मन्दिरमा दक्षिणावर्त्य अर्थात् दाहिना मुखको शङ्ख पनि रहेको छ । यो पनि दुर्लभ मानिन्छ । त्यसैगरी नागमणि, मण्डुकमणि, सूर्यकान्तमणि, गजमुक्ता, चिन्तामणि आदि बहुमूल्य दुर्लभ रत्नहरु पनि मन्दिरभित्र छन् जसलाई पशुपतिनाथको पूजाकै अङ्गस्वरुप संरक्षण गरी यद्यपि सुरक्षित राखिएका छन् । (दिव्यज्ञान, फाल्गुण/चैत्र २०६४)**

# पशुपतिनाथको दर्शनपश्चात्

# चतुषष्ठि शिवलिङ्ग-दर्शन

आराध्यदेव भगवान् पशुपतिनाथको दर्शनपछि नेपालभित्र रहेका चतुषष्ठि (चौंसट्ठी) शिवलिङ्गको दर्शन गरेमा मुक्ति एवं पुण्य हुन्छ भन्ने जनश्रुति तथा आध्यात्मिक मान्यता रहिआएको छ। ती चतुषष्ठि शिवलिङ्ग निम्न स्थानमा रहेका छन्–

१) आदिलिङ्ग कुशेश्वर, दुम्जा २) भीमेश्वर महादेव, दोलखा ३) कार्फेश्वर महादेव, बाह्रबिसे ४) काश्येपेश्वर महादेव, बाह्रबिसे नजिक मण्डन गाउँ ५) स्फटिकेश्वर महादेव, मण्डन गाउँभन्दा उत्तर ६) चण्डेश्वर महादेव, बनेपा ७) धनेश्वर महादेव, बनेपा ८) विकटेश्वर महादेव, साँगा ९) इन्द्रेश्वर महादेव, पनौती १०) भालेश्वर महादेव, पनौतीबाट एक कोश पश्चिम विहावर गाउँ ११) गुप्तेश्वर महादेव, ललितपुर लेलेभन्दा ईशानतर्फ पर्वतमा १३) चम्पेश्वर महादेव, ललितपुर तिलेश्वभन्दा पश्चिममा १४) रामेश्वर महादेव, ललितपुर टीकाभैरव १५) कालेश्वर महादेव, ललितपुर टुङगुन १६) नटारम्भेश्वर महादेव, मकवानपुर जिल्ला १७) उशलकेश्वर महादेव, टासीखेल फर्पिङ्ग १८) गोपालेश्वर महादेव, फर्पिङ्ग १९) चम्पेश्वर महादेव, चितलाङ्ग २०) उन्मत्तेश्वर महादेव, चितलाङ्गभन्दा तीन कोस पश्चिम २१) नन्दिकेश्वर महादेव, उन्मत्तेश्वरभन्दा दुई कोश आग्नेय कोणमा २२) गोखुरेश्वर महादेव, नन्दीकेश्वरभन्दा एक कोश पर नैऋत्य दिशामा २३) पाण्डुकेश्वर महादेव, गोखुरेश्वरभन्दा दुई कोश पश्चिममा २४) कुटेश्वर महादेव पाण्डुकेश्वरभन्दा एक कोश पश्चिममा २५) असितेश्वर महादेव, कुटेश्वरभन्दा डेढ कोश पश्चिममा २६) भैरवेश्वर महादेव, कुटेश्वरभन्दा एक डेढ कोश पश्चिम २७) ब्रह्मेश्वर महादेव, भैरवेश्वरभन्दा एक कोशमा २८) स्कन्देश्वर महादेव, ब्रह्मेश्वरभन्दा डेढ कोश पूर्वमा २९) शतरुद्रेश्वर महादेव, वाग्द्वार शिवपुरी ३०) काकेश्वर महादेव, भक्तपुर काकेश्वरी ३१) मणिचुडेश्वर महादेव, काठमाडौँबाट पूर्व मणिचुड पर्वत ३२) योगेश्वर महादेव, वज्रयोगिनी ३३) नारायणेश्वर महादेव, साँखु लप्से गाउँ ३४) ज्योतिर्लिङ्गेश्वर महादेव, नारायणेश्वरभन्दा आधा कोश पश्चिम ३५) रत्नचुडेश्वर महादेव, साँगा पर्वतबाट उत्तर ३६) वागेश्वर महादेव भक्तपुर, वागीश्वरा ३७) कीलेश्वर महादेव, चाँगु ३८) वाल्मीकेश्वर महादेव, भक्तपुर हनुमानघाट ३९) मङ्गलेश्वर महादेव, भक्तपुर उलाछेटोल ४०) विमलेश्वर महादेव, भक्तपुर सिपाडोल ४१) अनन्तेश्वर महादेव, भक्तपुर अनन्तलिङ्ग ४२) विश्वरुपेश्वर महादेव, भक्तपुर तर्सागोल ४३) सोमेश्वर महादेव, भक्तपुर सोमलिङ्गटार ४४) गोम्प्राटेश्वर महादेव, ललितपुर ४५) ऋङ्गेश्वर महादेव, ललितपुर सुनागुठी ४६) त्रिलिङ्गेश्वर महादेव, ललितपुर बहालुखा टोल ४७) कुपितेश्वर महादेव, ललितपुर भीमसेन स्थान ४८) सर्वेश्वर महादेव, ललितपुर कुम्भेश्वर ४९) गोलेकेश्वर महादेव, सर्वेश्वरभन्दा तीन कोश पश्चिम ५०) चन्दन मराटेश्वर महादेव, थानकोट ५१) यक्षेश्वर महादेव, इचंगु हलचोक ५२) चण्डिकेश्वर महादेव, काठमाडौँ टोखा ५३) धमेश्वर महादेव, काठमाडौँ टोखाको साल वन ५४) गोकर्णेश्वर महादेव, काठमाडौँ गोकर्ण ५५) कोटेश्वर महादेव, कठमाडौँ कोटेश्वर ५६) बानेश्वर महादेव, काठमाडौँ बानेश्वर ५७) ज्ञानेश्वर महादेव, काठमाडौँ ज्ञानेश्वर, ५८) पर्वतेश्वर महादेव, काठमाडौँ गौरीघाट कैलाशको बीचमा ५९) जलेश्वर महादेव, काठमाडौँ गुह्येश्वरी नजिक ६०) सिद्धेश्वर महादेव, काठमाडौँ गुह्येश्वरीबाट अलिक पर वायव्य कोणमा ६१) किराँतेश्वर महादेव, काठमाडौँ गौरीघाट ६२) भस्मेश्वर महादेव, काठमाडौँ देवपाटन ६३) भुवनेश्वर महादेव, पशुपति देवपाटनको पश्चिमतिर ६४) रुद्रागारेश्वर महादेव, पशुपति क्षेत्रभन्दा उत्तर क्षेत्रमा पर्दछ ।

(दिव्यज्ञान, शिवमहिमा, फाल्गुण/चैत्र, २०६४)

# कुलार्णव तन्त्रमा

मोक्ष मार्ग मानिने आम्नायहरू भगवान् शिवका पाँच मुखबाट प्रवर्तन भएका हुन्। भगवान् शिवको पूर्ववक्त्र (तत्पुरुष) बाट पूर्वाम्नाय, पश्चिमवक्त्र (सद्योजात) बाट पश्चिमाम्नाय, दक्षिणवक्त्र (अघोर) बाट दक्षिणाम्नाय, उत्तरवक्त्र (वामदेव) बाट उत्तराम्नाय र ऊर्ध्वमुख (ईशान) बाट कुलधर्म मानिएको ऊर्ध्वाम्नाय प्रवर्तन भयो। ऊर्ध्वशिखर भैरवीय शरीरको ऊर्ध्वभूमि हो। ईशान ऊर्ध्वताका अधिष्ठाता हुन्। सबै आगमहरूमा महत्त्वपूर्ण आगमोत्तम महारहस्य समन्वित, देवीपुत्र कुमार कार्तिकेयद्वारा नामसंज्ञा गरिएको 'श्रीकुलार्णवतन्त्र' ऊर्ध्वाम्नाय हो। कुलार्णव तरङ्गित कुलमार्गमा कुलाचारहरूको विशिष्ट महत्त्व रहेको छ।

यी कुलाचारहरूमा गुरुको महत्त्व सर्वोपरि मानिएको छ। श्रीचक्रको पूजा सर्वोत्तम पूजा हो। कुलार्णवतन्त्रमा शिवशक्तिबाट उत्पन्न गोत्रलाई सम्बोधन गरिएको 'कुल'का ज्ञानवान्लाई कौलिक भनिएको छ। अकुल-शिव र कुल-शक्ति, कुलाकुलको अनुसन्धाता कौलिक हुन्। चक्रस्थ कौलिकलाहरूलाई शिवशक्तिमय मानिन्छ। कुलद्रव्यको सेवन नियमानुसार पूजाको रूपमा गर्नुपर्ने हुन्छ। श्रीगुरुदेव, शिव पूजा स्थान प्रणम्य छन्, गुरुमुखबाट प्राप्त मन्त्र जप गर्नुपर्ने हुन्छ। गुरु प्रकाशन र मन्त्रको गोपन उचित छन्। गुरु पादुका पूजन आवश्यक मानिएको छ। गुरुका पाँच प्रकारका पत्नीहरू (१.ऊढा, २.धृता, ३.क्रीता, ४.समादृता

**"साक्षात् शिव शिष्यहरुलाई अनुग्रह गर्नको लागि नै मानव योनि स्वीकार्दै मनुष्य शरीरमा बाँधिएर गुरुरूपमा भूमण्डल भ्रमणको क्रीडा गरिरहनुहुन्छ। निराकार भए पनि साकार भावलाई स्वीकार्दै दयासागर शिव गुरुरूपमा प्रत्यक्ष भएर संसारी सबै व्यवहार निर्वाह गर्नुहुन्छ। ललाटलोचन, शिरका चान्द्रीकला र चार हातका दुई हात लुकाउँदै गुरुरूप लिनुहुन्छ। गुरु अ-त्रिनेत्र, द्विबाहु अच्युत शिव हुन्। चारमुखरहित ब्रह्मा हुन्। गुरुलाई नररूपमा देख्नु अपुण्य हो, पुण्यात्माले मात्र शिवरूपको गुरुको दर्शन गर्छन्।"**

# गुरुः सदाशिवः साक्षात्

# उल्लिखित गुरु रहस्य

र ५.कामराता) गुरुवत् पूज्य छन् ।

गुरुका घरमा वाहन चढी, पादुका लगाई, छाता-चमर ओढी, शृङ्गार गरी जानु हुँदैन । गुरुगृहमा स्नान-उबटन-दातौन, खुट्टाधुने, क्षौर-मूत्रोत्सर्ग, खुट्टा फैलाएर बस्न, झैझगडा गर्न हुँदैन । शक्तिच्छाया देवच्छाया गुरुच्छाया लङ्घन गर्न हुँदैन । श्रीप्रासादपरा सर्वोच्च मन्त्र मान्ने जस्ता मुख्य आचारहरू हुन् ।

डा. परमहंस मिश्रद्वारा व्याख्या गरिएको सर्वागमोत्तमोत्तम महार हस्यम ऊर्ध्वाम्नाय '**कुलार्णवतन्त्र**'मा जीवजातीस्थिति, कुलधर्म माहाम्य, ऊर्ध्वाम्नाय र श्रीप्रासादपरामन्त्र विज्ञान, कुलद्रव्यदर्शन, द्रव्यसंस्कार, बटुकशक्त्यादि पूजन, तत्त्वत्रयादि भेद, योग संस्थापन, विशेषदिवसार्चन, कुलाचारक्रम, पादुका भक्ति, गुरुशिष्यलक्षाण, गुरु-शिष्य परीक्षा, पुरश्चरणादि, काम्यकर्मविधान, गुरुनामादिवासना आदि १७ वटा उल्लास (अध्याय) मा वर्णित छन् ।

पार्वतीले आफ्ना जिज्ञासा कैलाशशिखरासीन परमेश्वर शिवसमक्ष व्यक्त गर्दा 'कुलेश्वर' भनी सम्बोधन गर्छिन् भने परमेश्वर शिव देवी पार्वतीलाई 'कुलेश्वरी' भन्दै दुई शिवशक्तिबीच छलफलसहित कुलाचार कुलमार्गको विस्तृत दीक्षा नै 'कुलार्णवतन्त्र'को सार हो । 'कुलार्णवतन्त्र'को तेह्रौं उल्लासमा कुलेश्वर-कुलेश्वरीको संवादमा वर्णित शिष्य शुभ लक्षण र दुर्गुणी लक्षण तथा गुरुदेवको महत्त्व (यस आलेखमा उद्धृत छ) प्रकाश पारिएको छ ।

य: शिव: सर्वग: सूक्ष्मश्चोन्मना निष्कलोऽव्यय: । व्योमकारो ह्यजोऽनन्त: स कथं पूज्यते प्रिये ॥ ५१ ॥

शिव सर्वव्याप्त सूक्ष्म तत्त्व हुन् । यो समनाको स्तरसम्ममात्र नभई उन्मना स्तरमा अनुभूत तत्त्व, निष्कल र अव्यय तत्त्व हो । यो व्योमाकार नितान्त सूक्ष्म, अज अनन्त छ । पूजाका लागि रूप, नाम र प्रतिष्ठा आवश्यक रहेकोले यसको पूजा कसरी गर्न सकिएला ? त्यसैले शिव स्वयंले गुरुरूपको आश्रय लिनुभयो । भक्तिभावले गुरुरूपमा पूजित शिव नै भोग र मोक्षलाई समानरूपले प्रदान गर्छन् ।

शिवोऽहं नाकृतिर्द्देवि नरदृग्गोचरो नहि । तस्मात् श्री गुरुरूपेण शिष्यान् रक्षति धार्किनान् ॥ ५३ ॥

श्री कुलेश्वरले कुलस्वामिनी पार्वतीलाई सम्झाउँदै आज्ञा गर्नुहुन्छ, शिवात्मक मन्त्र 'शिवोऽहं'को कुनै आकार कल्पना नगरिएको र मानव चर्मचक्षुले साक्षात्कार गर्न सकिँदैन । अत: स्वयं शिव नै गुरुरूपमा धार्मिक

## सत्मेव न संशय:

शिष्यहरूको रक्षा गर्नुहुन्छ । साक्षात् शिव शिष्यहरूलाई अनुग्रह गर्नको लागि नै मानव योनि स्वीकार्दै मनुष्य शरीरमा बाँधिएर गुरुरूपमा भूमण्डल भ्रमणको क्रीडा गरिरहनुहुन्छ। निराकार भए पनि साकार भावलाई स्वीकार्दै दयासागर शिव गुरुरूपमा प्रत्यक्ष भएर संसारी सबै व्यवहार निर्वाह गर्नुहुन्छ। ललाटलोचन, शिरका चान्द्रीकला र चार हातका दुई हात लुकाउँदै गुरुरूप लिनुहुन्छ। गुरु अ-त्रिनेत्र, द्विबाहु अच्युत शिव हुन्। चारमुखरहित ब्रह्मा हुन्। गुरुलाई नररूपमा देख्नु अपुण्य हो, पुण्यात्माले मात्र शिवरूपको गुरुको दर्शन गर्छन्। अन्धाले सूर्य देख्न असमर्थ हुन्छ, मन्दभागीहरू गुरुरूपमा परम तत्त्व देख्दैनन् ॥५३-५९॥

गुरुः सदाशिवः साक्षात् सत्यमेव न संशय। शिव एव गुरुर्नो चेद्भुक्तिं मुक्ति ददाति कः ॥ ६० ॥

गुरुदेव साक्षात् सदाशिव हुनुहुन्छ, यसमा शंका छैन । सदाशिव र सद्गुरुदेवमा कुनै अन्तर नै छैन । गुरु साक्षात् शिव हुनु भएकैले भुक्ति मुक्ति दुवै गुरुबाट प्राप्त हुन्छ ॥६०॥ पाशमा बाँधिएका पशुजनहरूको अशेष पापको नाश गर्दै तुरुन्त परमपदको वरदान दिँदै परमधाम पुऱ्याइदिनुहुन्छ। यही गुरुदेवको महत्त्व हो। सर्वानुग्रहकर्ता, करुणानिधि शिव आचार्यरूपले शिष्यहरूलाई दीक्षित गरी पाशहरूको उच्छेद गरी शिष्यलाई मुक्त गरी दिनुहुन्छ । कुम्भ (घडा) र कलश एकार्थवाचक पर्यायवाची शब्द हुन् । देवको अर्थमा पनि मन्त्र शब्द प्रयोग भए जस्तै गुरु शब्द पनि प्रयुक्त हुन्छ। गुरु, देव, मन्त्र शब्दहरू एकार्थवाचक शब्द गुरुदेव प्रयुक्त हुन्छ। जति महत्त्वपूर्ण विशाल, व्यापक र विशद् अर्थमा देव प्रयुक्त हुन्छ, उस्तै तीनै शब्दको महत्त्व समस्तरीय छ । त्यसैले शास्त्रमा देव, मन्त्र र गुरुदेवको पूजा गर्दा समान फल मिल्ने कुरा दर्शाइएको छ ॥६१-६५॥

भगवान् देवीलाई भन्नुहुन्छ, शिवत्वमा अधिष्ठित सर्वव्यापक तत्त्व भए पनि गुरुरूपमा पूजा स्वीकार्दै गुरूपदमा रही भवपाशरूपी सांसारिक बन्धनहरूबाट विमुक्त गराउन गुरुरूपमा रही विश्व प्रकाशमान गर्छु । शिष्यलाई प्रचलित सबै सिद्धान्तको सार तत्त्वज्ञानको स्वबोध, आफू अविछिन्नरूपले सतत अस्तित्वशील/अकाल (काललाई अधीनमा राख्ने) पुरुष, हृदय सर्वदा आनन्दमै ओतप्रोत हुने शाम्भवी समावेश दशा मानिने वस्तुतः उनै गुरु सम्बोधनका अधिकारी हुन् । छ अध्वा (कला, तत्त्व, भुवन, वर्ण, पद र मन्त्र), छ आधार (मूलाधार, स्वाधिष्ठान, मणिपुर, अनाहत, विशुद्ध र आज्ञा) तथा सोह्र आधार (६ चक्रको ऊर्ध्वस्थित र विन्दु, चन्द्रकला, निरोधिका, नाद, नादान्त, शक्ति, व्यापिनसमना, उन्मना र शिव) श्री तन्त्रालोकानुसार कुल, विष, शाक्त (बोधनाद), अग्नि, पवन, घट (नाभि), सर्वकाम (नाभ्यूर्ध्व), संजीवनी (हृदयपद्म), कूर्म (वक्ष), लोल (ग्रीवा), लम्बकोर्ध्व सुधाधार, सौम्य (लम्वक जड), गगनाभोग (भ्रूमध्य), विद्याकमल, चतुष्पथ वा चतुष्किका चिन्तामणि आधार तथा नाडचाधार (ब्रह्मरन्ध्रको ऊर्ध्वभागमा स्थित) का भेदको निर्णायक र प्रवेश विधिहरूका ज्ञाता, साधनाका उच्च सोपान-शिखरमा आरुढ योगी नै वस्तुतः गुरु पद्वीबाट

> **"भगवान् देवीलाई भन्नुहुन्छ, शिवत्वमा अधिष्ठित सर्वव्यापक तत्त्व भए पनि गुरूरूपमा पूजा स्वीकार्दै गुरूपदमा रही भवपाशरूपी सांसारिक बन्धनहरूबाट विमुक्त गराउन गुरूरूपमा रही विश्व प्रकाशमान गर्छु।"**

विभूषित हुन्छन् ॥६६-६९॥

पिण्ड, पद, रूप र रूपातीत रहस्यार्थ गर्भित शब्दको सम्यक् र विशेषरूपले वास्तविक अर्थ बुझिन्छ, परा, पश्यन्ति, मध्यमा, वैखरी आदि वाक्तत्त्वका सम्यक अर्थका ज्ञाता, आत्मतत्त्व, विद्यातत्त्व, शिवतत्त्व र सर्वतत्त्वादिको तात्त्विक दृष्टिबाट जानकार, पाशच्छेद विधि, वेध-दीक्षा, वेधको तात्पर्य-वधि, पशु ग्रहणको तात्पर्य के हो ? कसरी गरिन्छ ? किन गरिन्छ ? आदि आगमिक रहस्यका ज्ञाता, पद, पाश र पशु शब्दको रहस्यमय सन्दर्भलाई आत्मसात् गर्दै यसका आन्तरिक र बाह्य विधानको जानकार, चक्रसंकेत, मन्त्र र पूजा संकेतका विशिष्ठार्थ परिचित, बाणलिंग, इतरलिंग र स्वयम्भू लिंगको वास्तविक परिभाषाबाट परिचित, आणव, कार्म र मायीय मलको परिष्कारसँग परिचित मात्र नभई शोधन विशोधनका विज्ञ, आरक्त शुक्ल र मिश्रादि (कृष्ण) शास्त्र वर्णित वासनाहरूबाट शिष्यको रक्षा गर्ने, महामुद्रा नमोमुद्रा (खेचरी) उड्डियान, जालन्धर र मूलबन्ध मुद्राका विशेषज्ञ, तन्त्र र आगम शास्त्रमा विस्तारपूर्वक वर्णित शिवदेखि पृथ्वीपर्यन्त छत्तीस तत्त्वसँग परिचित, अन्तर्याग-बहिर्याग-कला-ज्ञान विज्ञान तथा शास्त्र वर्णित विभिन्न यन्त्रहरूको निर्माणका ज्ञाता, पिण्ड ब्रह्माण्डको ऐक्य यिनको वास्तविक स्थिति, शरीरस्थ शिरा, अस्थि, रोम-संख्यादि विषयहरूका विशेषज्ञ नै 'गुरु' हुन् ॥७६-८८॥

योगशास्त्रमा प्रसिद्ध पद्मादि चौरासी आसनका विधि, प्रयोगमा विचक्षण साथै अष्टांग योगका ज्ञाता परमगुरुका श्रेणीमा हुन्छन् । अष्टपाशबाट परिचित घृणा, शंका, भय, लज्जा जुगुप्सा, कुल-शील र जाति बन्धनमा बाँधिएका 'पशुहरू' उपासना र साधनाबाट केही भाग्यशालीहरू मात्र पाशमुक्त भई साक्षात् महेश्वर हुन्छन् । यसरी पाशमुक्त मन्त्र प्रदान गर्ने विचक्षण व्यक्ति नै परमगुरु कहलिन्छन् । कारण-मुद्रा मानिने योनिमुद्राका बन्धन विधि, मन्त्र चैतन्यको दर्शन पाउनुका साथै मन्त्रहरू तथा यन्त्रहरूका स्वरूपका ज्ञाता, विनिक्षिप्त संक्लिष्ट र संविनीत मानसिक अवस्थाका गतिविधिका जानकार, मूलाधारदेखि ब्रह्मरन्ध्रपर्यन्त विशिष्ट चक्रद्वारा जीवन यात्रा पूरा गरेका जानकारी भएका विचक्षण व्यक्ति 'परमगुरु' हुन् । गुरु परम्पराका क्रममा तत्त्वज्ञानको सुधाधाराबाट तत्त्वज्ञान रहस्यको अमृत बहने दीक्षा गुरुदेवबाट प्राप्त गरिसकेका नै 'गुरु' हुन् । इन्द्रियजन्य सबै जागतिक सुख हेय भई सहज आनन्द हुने वरदान दिने गुरु शिष्यबाट सेव्य मानिन्छन् । सांसारिक भयले भयभीत भई गुरु सेवामा पुगेका शिष्यको भय व्रत उपवासादि नियमहरूका माध्यमले निराकरण र नियन्त्रण गरिदिने नै 'गुरु' हुन् । प्रसन्न भएर शक्तिपातले क्षणभरमै मोक्ष-लक्ष्मीको वरदान दिई संसारसागरबाट पार उतारी दिने गुरु निश्चय नै दुर्लभ हुन्छन् । क्षणभरमा स्वात्मशक्तिको चमत्कार र अपूर्व सामर्थ्यले, कुनै क्रियायोग वा साधनाको अभ्यासबिना नै शिष्यलाई क्षणभरमा दिव्य कृतार्थ गरिदिने सद्गुरुदेव दुर्लभ हुन्छन् ॥८९-१००॥

तत्काल विश्वास उत्पन्न गरी, अत्यन्त सुलभ र स्वात्मको सौख्य प्रदान गरी ज्ञानोपदेश गर्ने, द्वीप-द्वीपान्तर भ्रमण गर्दै रहने भए पनि गुरु अभ्यासरहित ज्ञानोपदेशले शिष्यको मनमा प्रकाश फैलाउन सक्षम गुरुदेव दुर्लभ हुन्छन् । भोकाप्यासालाई भोजन प्राप्तिले अपार तृप्ति दिए झैं ज्ञानोपदेशले तृप्ति दिने गुरु दुर्लभ छन् । घर-घरमा दीप बालेर उज्यालो पारिन्छ । गुरुजनको घर-घरमा आगमन हुन सक्छ । तर सूर्यरश्मिझैं घरको दीप सिद्ध हुने परमगुरु दुर्लभ छन् । वेद पारंगत, सर्वशास्त्र तथा सर्वविद्याविशारद गुरुहरू हुन्छन् तर परमतत्त्व पारंगत गुरु दुर्लभ छन्। आत्मज्ञानका अतिरिक्त अन्य सबै कुरा प्रदान गर्ने दक्ष गुरुको कमी छैन तर लोकमा आत्म प्रकाश गर्ने गुरु दुर्लभ छन् । निगम, आगम र अन्य शास्त्रहरूका मन्त्रहरूबाट सिद्ध गुरु दुर्लभ छन् । शिष्यको वृत्तिमा आधार मान्ने गुरुहरूको बाहुल्य त छ तर शिष्यको समस्त दुःखको विनाश गरी मुक्तिमार्ग प्रशस्त गरीदिने गुरु पाउन अति कठीन छ। वर्णाश्रम धर्म, कुलदर्शन कौलमार्गका विशेषज्ञ धेरै गुरुजनहरू भेटिन्छन् तर संकल्पहरूलाई अतिक्रान्त गरी निष्कल जीवन व्यतीत गर्ने गुरु दुर्लभ हुन्छन्। जुन गुरुदेवको सम्पर्कले परानन्द-मकरन्द-सन्दोह प्राप्ति हुन्छ, यस्ता गुरुलाई सद्गुरुदेवको रूपमा वरण गर्नु बुद्धिमानी हुन्छ ॥१०१-११०॥

यो एउटा रहस्य हो, उच्चस्तरीय चमत्कारपूर्ण अनुभव भए पनि दुर्भाग्यवश अनुभूतिको पराकाष्ठापर्यन्त बुद्धि विकास हुँदैन। केही भाग्यमानी साधकहरू पनि हुन्छन्, जसको अनुभूतिहरूको रहस्यले बुद्धि समेत प्रकाशमान हुन्छ । यस्ता गुरु धन्य र दुर्लभ हुन्छन् जसको एकै अनुग्रहपूर्णभाव दृष्टिमा शिष्यको भविष्यपथ प्रशस्त हुन्छ, उनै गुरु वरणीय हुन्छन् । शंका एक राक्षसी हो जसले सचराचर त्रैलोक्य नै ग्रास बनाउँछे। यस्तो कृत्यारूपिणी शंकालाई नै ग्रास बनाउने गुरु दुर्लभ मानिन्छन्। नवनीत (शीत) आगोको सामुन्ने राख्दा बाफ बनी रूपान्तरण हुनु अवश्यंभावी छ। अग्निदेव प्रबल जाज्वल्यमान भई सहस्र ज्वालापुञ्जले आकाश आलिंगन गरिरहेको छ । दन्किरहेको आगोमा काँचो वा सुकेका काठ-दाउरा राखेमा

बलेर भस्म हुन्छ । भगवान् देवीलाई बुझाउनुहुन्छ, गुरुदेवको एक कटाक्ष दृष्टिले शिष्यका समस्त पाप क्षण मात्रमा भस्मसात् हुन्छ । आँधीबेरीमा केही कपासका टुक्राहरू उडाउँदा कहाँ गए अत्तोपत्तो हुँदैन । गुरुदेवको कारुण्यवत् महाप्रवाहले शिष्यको पापराशि कता विलीन भयो थाहा हुँदैन । दीप प्रकाशले अन्धकार नाश भए जस्तै सद्गुरुदेवको दर्शन मात्रले अज्ञानरूप अन्धकारको सर्वनाश हुन्छ ॥१११-११६॥

शास्त्र निर्दिष्ट शुभलक्षण गुरुमा हुनुपर्छ । पूजा, होम, आश्रम, आचार, तप, व्रतादि जीवनलाई उत्कर्षमा लाने कार्य हुन् । तत्त्वज्ञानबिना मन्त्र, आगम, ज्ञान-विज्ञान समेत निष्फल हुन्छन्, तत्त्वज्ञ हुन गुरुलाई अनिवार्य छ । परतत्त्व स्वयंवेद्य छ, आत्मतत्त्वको अनुग्रह नै छैन, यस्ताहरू 'पर'को अधिकारी कसरी होलान् ? मनको आकार ब्रह्मको आकारसँग मिल्दोजुल्दो छ । आफ्नो शरीरमा स्थित प्रत्यक्ष ब्रह्मको महान् रूपलाई नजान्ने गुरुले अरूलाई कसरी मोक्ष प्रदान गर्लान् ? भगवान् भन्नुहुन्छ, सबै लक्षणबाट हीन भए पनि ज्ञानवान् गुरु उत्तम हुन्छन्, तत्त्वविद् व्यक्ति स्वयं मुक्त रहेकोले अरूलाई पनि मुक्त गर्न सक्छन्, अत: गुरु तत्त्वज्ञानी हुनैपर्छ । तत्त्वहीनबाट तत्त्वज्ञान ग्रहण गर्न सकिँदैन । स्वयं मुक्त गुरुले पशुभावमा रहेका पुरुषलाई बोधको महाप्रकाशले प्रकाशित गर्न सक्छन् । तत्त्वज्ञ गुरुबाट उपदेशित भाग्यशाली शिष्य पनि बिनासशंय अवश्यै तत्त्वज्ञ हुन्छन् । जो विद्ध छन् वा वेधदीक्षा प्राप्त गरेका छन्, उनै शिष्यलाई पनि वेधदीक्षा दिन सक्षम हुन्छन्, जो मुक्त छन्, उनैले मोचन पावन कार्य सिद्ध गर्न सक्छन् । विज्ञ पुरुषले मूर्खको उद्धार गर्न सक्छ,

आत्मज्ञानका अतिरिक्त अन्य सबै कुरा प्रदान गर्ने दक्ष गुरुको कमी छैन तर लोकमा आत्म प्रकाश गर्ने गुरु दुर्लभ छन् । निगम, आगम र अन्य शास्त्रहरुका मन्त्रहरुबाट सिद्ध गुरु दुर्लभ छन् ।

मूर्खले मूर्खको उद्धार गर्ने कुरा सोच्न पनि सकिँदैन । ढुंगाले ढुंगालाई नदी पारी लैजान सक्छ तर ढुंगाले ढुंगालाई कसरी पारी लैजाला ? ॥११७-१२६॥

शैवशास्त्रले परमेष्ठी, परम र दीक्षागुरु तीन श्रेणीका गुरु, वैष्णवमा पाँच गुरुको र वेद तथा शास्त्रमा सय गुरुको कथन छ तर कुलमार्ग ज्ञानवान् बहु गुरु कथनको पक्षमा छैन । प्रेरक, सूचक, वाचक, दर्शक, शिक्षक र बोधक ६ प्रकारका गुरु श्रेणीको मान्यता स्वीकार गरिएको छ । वस्तुत: यो मान्यतामा एक क्रम मान्य रहेको छ । यी ६ प्रकारका गुरुजनमा पहिला पाँच गुरुहरू कार्यसिद्धिलाई अगाडि बढाउन सहयोगी मानिन्छन् तर छैटौँ स्तरका बोधक गुरु नै मुक्तिका कारक हुन्छन् । दीक्षाउपरान्त पूर्णाभिषेक गर्ने गुरुको चरणपादुका पूजनीय हुन्छ । सर्वलक्षणसम्पन्न शिष्यका समस्त संशयको निराकरण गर्न समर्थ ज्ञानप्रद गुरु पाएपश्चात् अरू कुनै गुरुलाई पछ्याउनु पर्दैन ॥१२७-१३०॥

जय गुरुदेव !

भगवान् भन्नुहुन्छ, सबै लक्षणबाट हीन भए पनि ज्ञानवान् गुरु उत्तम हुन्छन्, तत्त्वविद् व्यक्ति स्वयं मुक्त रहेकोले अरुलाई पनि मुक्त गर्न सक्छन्, अतः गुरु तत्त्वज्ञानी हुनैपर्छ । तत्त्वहीनबाट तत्त्वज्ञान ग्रहण गर्न सकिँदैन । स्वयं मुक्त गुरुले पशुभावमा रहेका पुरुषलाई बोधको महाप्रकाशले प्रकाशित गर्न सक्छन् । तत्त्वज्ञ गुरुबाट उपदेशित भाग्यशाली शिष्य पनि बिनासशंय अवश्यै तत्त्वज्ञ हुन्छन् । जो विद्ध छन् वा वेधदीक्षा प्राप्त गरेका छन्, उनै शिष्यलाई पनि वेधदीक्षा दिन सक्षम हुन्छन्, जो मुक्त छन्, उनैले मोचन पावन कार्य सिद्ध गर्न सक्छन् । विज्ञ पुरुषले मूर्खको उद्धार गर्न सक्छ, मूर्खले मूर्खको उद्धार गर्ने कुरा सोच्न पनि सकिँदैन । ढुंगाले ढुंगालाई नदी पारी लैजान सक्छ तर ढुंगाले ढुंगालाई कसरी पारी लैजाला ?

# पशुपतिनाथको महास्नान

हरेक पूर्णिमाका दिन भगवान् पशुपतिनाथलाई महास्नान गराउनको निम्ति चाहिने दही, चामल, चिउरा, मास, दाउरा, फलफूल, बोका, चौरासी व्यञ्जनमा परिगणित गरिएका साग, जडिबुटी, पात इत्यादि रकम फटकशिलाबाटै ल्याउने व्यवस्था गरिएअनुसार आजसम्म पनि आउँदैछ। फटकशिलामा नउब्जने चिजबीज र घिउ, लत्ताकपडा, सुन, चाँदी आदि मालसामान उपत्यकाका गुठी जग्गाको आम्दानीबाट गुठी खर्च अड्डाले खरिद गरी वा ठेकेदारमार्फत् लिई महास्नान पर्व सम्पादन गरिन्छ।

महास्नानका लागि चाहिने सामग्री महास्नान घरमा राखिन्छ। यस्तै महास्नानसम्बन्धी यज्ञ गर्नको निम्ति पशुपतिनाथकै प्रांगणभित्र यज्ञशाला छ। यज्ञमा ब्राह्मण राजोपाध्याय हुन्छन् जसले वैदिक हवनको कार्य गर्छन्। साथै, आचाजु (नेवारी समाजका तान्त्रिक), तलेजु भवानीका आचाजु, जोशी, वैद्य आदिले तान्त्रिक विधिद्वारा यज्ञको काम हवनादि गर्छन्।

**एउटा महास्नानमा चाहिने मुख्य सामानको टिपोट (एक पटकलाई)**

१) श्री पशुपतिनाथलाई स्नान गराउन गाईको दूध सत्ताइस पाथी,

२) दही सत्ताइस पाथी,

३) मह, एकासी कुरुवा (१ मुरी २ माना) स्नानको लागि पचहत्तर कुरुवा)

४) गाईको घिउ जम्मा धार्नी ४६५ (पशुपतिनाथलाई महास्नान गराउन ३३ धार्नी पाँच पाउ)

६) चिनी धार्नी तेत्तीस र पाँच पाउ।

उपर्युक्त स्नान गराउने सामान दूध, दही, घिउ, मह, चिनी आदि २७ घैलामा राखिन्छ। त्यसमध्ये एक-एक घैला वासुकीको लागि पर सारिन्छ। दुई-दुई घैला यज्ञ स्थलमा लगी अभिमन्त्रित गरिन्छ। २४, २४ घडा श्री पशुपतिनाथको मन्दिरमा राखिन्छ।

यज्ञमा अभिमन्त्रित गरिएका दुई-दुई घैलामध्ये एक-एक घैला पुनः पशुपति मन्दिरमा ल्याई त्यो समेत २५ घैलाले श्री पशुपतिनाथको स्नान गराइन्छ।

स्नानपछि महापूजा र पञ्चमुखमा पाँच जातका रोटी, औँठी, लाखामरी, खाजा, जुन प्रसाद बालुसाहीको भोग हुन्छ। यसबाहेक विभिन्न जातका फलफूल, विभिन्न पशुपंछीका आकारमा बनाइएका रोटीहरु पनि चढाउनुपर्छ।

पिठो, घिउ, चिनीबाट एउटा भव्य भैरवको मूर्ति पनि बनाइन्छ। यो भैरव मूर्ति श्री पशुपतिनाथको दक्षिण ढोका बाहिरको धर्मशिला नामक तावाँ पत्रमाथि महाभोगको निम्ति ६ मुरी चामल पकाएर थुपारेको भोगको बीचमा राखिन्छ। बाहिर थुपारेको महाभोगबाट धागाको सूत्र बाँधी श्री पशुपतिनाथ अगाडि राखिएको चाँदीको बाटामा डुबाइन्छ।

यो महास्नान पर्वमा पशुपति क्षेत्रका सबैजसो देवमन्दिरमा पनि पूजा हुन्छ। गुह्येश्वरीमा पूजा र एउटा बोकाको बलिदान, जयवागेश्वरीमा पूजा र हाँसको बलि, पञ्चागणेशमा पूजा र हाँसको बलि आदि गरिन्छ। महाभोग पकाउन तेह्र जवान झा (मैथिल) ब्राह्मण नियुक्त छन्। श्री पशुपतिनाथलाई दृष्टि १२, वासुकिलाई २, चाँदीको जनै, वासुकिलाई चाँदीको टीका, भट्टहरुलाई सुनका औँठी, जोशीलाई औँठी ३, आचाजु जना ४ लाई औँठी ४, देव ब्राह्मण (राजोपाध्याय) १ को औँठी १ अरु ४ के चाँदीका औँठी ४ अन्य देवीदेवतालाई चढाउने साना दृष्टि जोर १७ महाबलि भोगमा राख्न सुन तोला १ र आठ लाल, कलशमा राख्न सुन चाँदीका कमल फूल १५ आदि प्रत्येक पूर्णिमाको महास्नानका निमित्त ठेगिएको छ। यस्तै अत्तर, फुलेल, कस्तुरी, सालधूप, श्रीखण्ड, केसरी, कपूर, गोरोचन, सिम्रिक, गुजराती सिन्दुर, बेलपत्र सवालाख, अलैँची, दाख, छोहरा सुपारी, ल्वाङ, खयर, बदाम, मखन, नरिवल, पान, माजुमफल आदि पनि उक्त पूजाको निम्ति दरबन्दी लेखिएको छ।

यसरी महास्नान महाभोग बलिको काम भएपछि एउटा बाछो ल्याएर डामी पशुपति प्रितये गरी साँडे छाड्ने परम्परा पनि छँदैछ। १२ महिनाका १२ पूर्णिमामा उपर्युक्त सबै सामान छुट्टाछुट्टै चाहिन्छ र अधिकमास परेको वर्ष १३ पूर्णिमा पर्ने हुँदा त्यसमा पनि उत्ति नै सामान जम्मा गरी महास्नान गरिन्छ। जय गुरुदेव !

# तिम्रो अञ्जुलीलाई मोतीले भरिदिन म उद्यत् छु यस गुरू पूर्णिमामा..

*परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) ले गुरु पूर्णिमाको अवसरमा आफ्ना शिष्यहरुलाई गर्नुभएको एक आह्वान*

प्रिय आत्मीय मानसका राजहंसहरू!

आषाढको पहिलो दिनले नै इन्द्रधनुषको बाटोमा गुरुको नाम अङ्कित गरिदिन्छ र तिनै रङ्गहरुलाई शिष्यले आफ्नो मनभित्र उतारेर मानसको मानसरोवरमा गहिरो डुबुल्की मार्दछ। अत्यन्त प्रफुल्लताका साथ आफ्ना पखेटाहरूलाई अमृतले भिजाएर आह्लाद एवम् प्रसन्नताका साथ पखेटा फट्फटाउँदै निलो आकाशमा उडेर इन्द्रधनुषका रङ्गहरूमा हराउनुलाई नै जीवनको पूर्णता मानिएको छ।

शिष्यले पनि आषाढको पहिलो दिनबाटै गुरु पूर्णिमाको प्रतीक्षा गरिरहेको हुन्छ किनकि यो दिन वास्तवमा भन्ने हो भने शिष्य स्वयंको पर्व हो। यो दिन शिष्यको आत्मीय जीवनको लेखाजोखा हो। यो दिन तिम्रो प्राणमा अङ्कित भएको मेरो सन्देशको पर्व हो। सम्पूर्ण वर्षभरिको सौभाग्यशाली पर्व हो यो दिन। यो आनन्ददायक क्षण हो किनकि यसै पर्वका लागि आषाढका स-साना थोपाहरू श्रद्धा बनेर गुरु पूर्णिमाको दिनमा समुद्रमा एकाकार हुनको लागि प्रयत्नरत रहन्छन्।

यो पर्व वास्तवमा गुरुको पर्व हुँदै होइन, यो त शिष्य पर्व हो। यसलाई शिष्य पूर्णिमा भनिन्छ किनकि यो शिष्यको जीवनको एउटा अन्तरङ्ग र महत्त्वपूर्ण क्षण हो। यो उसको लागि उत्सवको आयोजना हो। यो मनभित्रको प्रसन्नता व्यक्त गर्ने पर्व हो। एउटा यस्तो पर्व हो, जुन समयमा शिष्यले जीवनको प्रफुल्लता मधुरता र समर्पणको बाटोमा गुरुको चरणचिह्न अङ्कित गरेर स्वयंलाई सौभाग्यशाली भएको महसुस गर्दछ।

यदि तिमी मेरा आत्मीय हौ, मेरो प्राणको घनिभूत स्वरूप हौ, मेरो जीवनको रस एवम् चेतना हौ भने यो निश्चय नै तिम्रो लागि उत्सव, आनन्द र सौभाग्यको पर्व हो किनकि शिष्यले आफ्नो जीवनको पूर्णता तब मात्र प्राप्त गर्न सक्दछ जब ऊ गुरु ऋणबाट मुक्त हुन सक्दछ। आमाले त केवल तिम्रो शरीरलाई जन्म दिनुहुन्छ तर मैले त्यस देहलाई संस्कारित गरेको छु, त्यसमा प्राणश्चेतना जगाएको छु। अत्यन्त तातो घाममा पनि वासन्ती पवन प्रवाहित गरेको छु। मैले त्यस जलिरहेको भूमिमा आनन्दको अमिट अक्षर लेख्ने प्रक्रिया गरेको छु र मैले तिमीलाई "पुत्र" शब्दबाट, "आत्मीय" शब्दबाट, "प्राण" शब्दबाट सम्बोधन गरेको छु। मैले तिम्रो जीवनमा त्यो प्रक्रिया सम्पन्न गरेको छु जुन कुनै अन्य गुरुले गर्न सक्दै सक्दैनन्। मैले तिम्रो जीवनमा त्यो चेतना दिएको छु जुन अन्य गुरुहरूको वशको कुरा होइन। मैले तिमीभित्र मधुरता र साधनाको गङ्गा प्रवाहित गरेको छु जसमा स्नान गरेर तिमी समाजका यी फोहोरी र घिनलाग्दा मानिसबाट भिन्न र दैदीप्यमान देखिन लागेका छौ। तिम्रो वाणीमा एउटा तेज र क्षमता आउन थालेको छ, तिम्रा शब्दहरूमा एउटा प्रभाव उत्पन्न हुन थालेको छ।

यो सबै गुरुद्वारा नै सम्भव हुन सकेको हो। यो यस जीवनको मात्र हैन, पुराना कैयौं जन्मको लेखाजोखा हो। म तिम्रो यस जीवनको साक्षीभूत गुरु मात्र होइन अपितु, अघिल्ला पच्चीस जन्मदेखिको लेखाजोखा, हिसाबकिताब

मसँग छ र मैले प्रत्येक पटक तिमीलाई बोलाएँ र तिमीले सुनेको नसुनेझैं गरिदियौ। प्रत्येक पटक तिम्रो ढोका मैले ढक्ढक्याएँ र प्रत्येक पटक तिमीले आग्लो लगाएर बसिरह्यौ। प्रत्येक पटक मैले तिमीलाई झक्झक्याउने, जगाउने, चैतन्यता प्रदान गर्ने प्रयास गरैं र प्रत्येक पटक तिमीले आफ्नो मुख गृहस्थ र समाजको मरुभूमिमा गाडेर देखेको नदेख्यै, सुनेको नसुन्यै गरिदियौ।

तर यसरी कहिलेसम्म चल्ला ? कति जन्मसम्म तिम्रो यो मौनता, तिम्रो यो कायरता, तिम्रो यो डरपोकपनले मलाई पीडा दिँदै रहला ? कहिलेसम्म म घाँटी सुक्ने गरी चिच्याउँदै तिमीलाई बोलाइरहूँ र तिमीले सुनेको नसुन्यै गरिरहन्छौ ? कहिलेसम्म मैले तिम्रो हात समातेर सिद्धयोगा तालको किनारमा लैजाने प्रयास गरिरहूँ र तिमी मेरो हातबाट फुत्किएर समाजको त्यस विषाक्त वायुमा सास फेर्न प्रयास गरिरहन्छौ ? यस्तो कहिलेसम्म होला ? यसरी कहिलेसम्म चल्ला ? यसप्रकारले कहिलेसम्म गुरुलाई पीडा दिइरहन्छौ ? कहिलेसम्म गुरुको चित्तमा आफ्ना धारिला नङ्ग्राले चिथोरिरहन्छौ ? कहिलेसम्म उनलाई वेदना दिइरहन्छौ ?

मैले तिमीलाई आफ्नो नाम दिएको छु, र यसभन्दा पनि बढी मैले तिमीलाई आफ्नो पुत्र तथा आत्मीय भनेको छु, आफ्नो गोत्र मैले तिमीलाई दिएको छु, र आफ्नो जीवनको रसले सिँचेर तिम्रो जीवनको बेललाई ओइलाउनबाट बचाउने प्रयास गरेको छु। तिम्रा सुकेका डाँठहरूमा रस प्रदान गर्ने सफलतापूवर्क प्रयास गरेको छु। र मेरो यो प्रयत्न रहेको छ कि यी सुकेका डाँठहरूमा फेरि नयाँ पालुवा लागून्, फेरि वातावरण सौरभमय बनोस्। मैले जीवनको प्रत्येक क्षण यसैको लागि लगाएको छु। हिमालयका ठूला चट्टानमा घस्रेर पनि तिमीलाई अमृत पियाउने प्रयास गरेको छु। तिम्रो प्रत्येक जन्ममा मैले चेतना दिने कोशिश गरेको छु र प्रत्येक पटक तिम्रो ओइलाएको मुहारमा एउटा खुशी, आह्लाद एवं चमक प्रदान गर्ने प्रयास गरेको छु।

तर यो सबै त्यसै भएको होइन।

यसको लागि तिमीले भन्दा मैले बढी परिश्रम गर्नुपर्‍यो। मैले आफ्नो शरीरको बत्ती बनाएर तिम्रो जीवनको अन्धकारमा उज्यालो छर्ने प्रयास गरेको छु। आफ्नो प्राणलाई दोहन गरेर त्यस अमृत जलले तिम्रो बेललाई सिँच्ने र हराभरा बनाइराख्ने प्रयास गरेको छु। तिल-तिल

गरेर आफूलाई जलाएर पनि तिम्रो मुहारमा मुस्कान दिने कोशिश गरेको छु। र मेरो प्रत्येक क्षण, जीवनको प्रत्येक चिन्तन यस कार्यको लागि समर्पित भएको छ जसबाट मेरो मानसका राजहंसले आफ्नो जातिलाई ठम्याउन सकून्, आफ्नो स्वरूपलाई चिन्न सकून्, आफ्नो गोत्रसँग अभिभूत हुन सकून्, र मेरो हृदयको यस मानसरोवरमा गहिरो डुबुल्की मारेर फर्केर आउँदा मोती लिएर आउन सकून्।

र यो प्रत्येक पटक भएको छ, र यो अघिल्ला धेरै जन्मदेखि हुँदै आइरहेको छ, किनकि मैले हरेक क्षण तिमीहरुको लागि नै प्रयत्न गरेको छु। मेरो जीवन आफू स्वयंको लागि वा परिवारको लागि होइन। मेरो जीवन त शिष्यहरूको लागि हो, मेरो जीवनको उद्देश्य त शिष्यहरूलाई पूर्णता दिने प्रयास हो। यसको लागि मैले सिद्धाश्रमजस्तो आनन्ददायक र अनिर्वचनीय आश्रम छोडेर तिम्रो यस फोहोर

र घिनलाग्दो ठाउँमा आएर बसेँ। जो वायुवेगका साथ एक ठाउँबाट अर्को ठाउँमा पुग्न सक्षम थियो, उसले तिम्रो लागि एउटा सानो वाहनमा आफूलाई कैद गरिदियो। जसको घर सम्पूर्ण ब्रह्माण्ड थियो, कुनै पनि ग्रह वा लोकमा विचरण गर्दै निरन्तर आनन्दयुक्त रहन्थ्यो, उसले तिम्रो लागि स्वयंलाई एउटा सानो घरमा आबद्ध गरिदियो। तिम्रो लागि उसले समाजसँग जुध्यो, आलोचना सुन्यो, आरोप झेल्यो, र कैयौं प्रकारका कुतर्कको सामना गऱ्यो। यो सबै किन ? के आवश्यकता थियो उसलाई यो सबै सहने, झेल्ने र भोग्ने ?

तर यो आवश्यक थियो, तिम्रै कारणले आवश्यक थियो। तिमीलाई आफूसँगै सिद्धाश्रम लिएर जानको लागि आवश्यक थियो। तिमीलाई सिद्धयोगा तालको किनारमा लैजानको लागि आवश्यक थियो, र आवश्यक थियो ती ऋषि, मुनि, योगीहरूको दर्शन गराउनको लागि, ब्रह्मस्वरूप स्वामी सच्चिदानन्दजीको चरणमा लैजानको लागि, र यो आवश्यक थियो तिम्रो जीवनको मलिनता, दोष र समस्त पापलाई समाप्त पार्नको लागि।

र मैले यस्तो गरेँ। मेरो प्रत्येक क्षण यसैको लागि कृतसङ्कल्पित थियो र छ कि मैले तिमीलाई गर्वसाथ शिर उठाएर रहने प्रेरणा दिन सकूँ। मैले तिमीलाई यस दुर्गन्धित समाजमा देवदूत बनाएर उभ्याउन सकूँ, तिम्रो आँखामा एउटा चमक ल्याउन सकूँ, तिम्रा पखेटामा यति क्षमता दिन सकूँ कि तिमी आकाशको सुदूर उचाइमा नथाकीकन पुग्न सक र त्यस ब्रह्मत्वको आनन्द लिन सक। मैले तिमीलाई ती इन्द्रधनुषका रंगमा रंग छर्नको लागि प्रशिक्षित गर्न सकूँ जहाँ विस्तृत आकाश होस्, जहाँ आनन्दको समुद्र उर्लिएरहेको होस्, जहाँ प्रेम र माधुर्यताको शीतल बतास होस्, जहाँ पूर्णता र सिद्धिहरू जयमाला लिएर तिम्रो गलामा पहिऱ्याउनको लागि उद्यत् र उत्सुक होऊन्।

र यो सबै बारम्बार भइरहेको छ, तिमीले आफू स्वयंलाई पहिलोपटक चिन्ने प्रयत्न गरेका छौ, पहिलोपटक यो अनुभव गरेका छौ कि तिमी संसारमा एक्लै छैनौ, तिम्रो हेरविचार गर्ने कोही अवश्य छ जसले तिम्रो जीवनमा पहरेदारी गरिरहेको छ। कुनै यस्तो व्यक्तित्व तिम्रो जीवनमा अवश्य छ जसलाई आफ्नो चिन्ता, व्यथा र समस्याहरू खुशीसाथ दिएर स्वयंलाई हलुको महसुस गर्न सक्छौ र मलाई तिमीले जे दिइरहेका छौ, त्यसबाट म प्रसन्न छु।

मैले त तिमीलाई स्पष्टरूपबाट भन्दै आइरहेको छु कि जब जीवनको यस मोडमा मेरो र तिम्रो भेट भयो, तब तिमीले आफ्नो आँखा खोलिदिनुपर्दछ, तन्द्राबाट ब्यूँझेर मलाई चिन्ने प्रयास गर्नुपर्दछ। तिमी मृत्युको जुन बाटोमा अगाडि बढिरहेका छौ, अब पछाडि फर्केर मेरो हात समात्नुपर्दछ, मेरो पदचिह्न पहिल्याउँदै हिँड्नुपर्दछ किनकि मैले तिमीलाई जुन मार्गमा गतिशील बनाइरहेको छु, त्यो अमृत्युको बाटो हो, त्यो आनन्दको पथ हो, त्यो सिद्धाश्रमको मार्ग हो जहाँ सर्वत्र प्रसन्नता, आह्लाद, खुशी, चेतना र प्रफुल्लता छ, जहाँ बुढ्यौली छैन, जहाँ रोगको आक्रमण छैन, जहाँ चिन्ताहरू वरपरै देखिँदैनन्, जहाँ बाधाहरूले तिम्रो बाटो छेक्न सक्तैनन्।

किनकि म तिम्रो साथमा छु, किनकि तिम्रो पाउ मेरो पाउसँगसँगै अगाडि बढिरहेका छन्, किनकि तिमीसँग

म छु, तिम्रो जीवनको हेरविचार गर्छु, तिम्रो जीवनलाई आह्लादकारक बनाउँछु, तिम्रो जीवनको प्रत्येक क्षणको हिसाबकिताब राख्छु।

र अब तिमीले दिएको थप पीडा झेल्न मेरो मन तयार छैन। कहिलेसम्म तिमी बारम्बार जन्म लिइरहन्छौ ? कहिलेसम्म तिमी मलमूत्रबाट लिप्त जीवन बाँचिरहन्छौ ? कहिलेसम्म तिमी समाज र गृहस्थका काँढामाथि हिँड्दै पीडा भोगिरहन्छौ ? कहिलेसम्म तिमी अभावको यस विषाक्त हावामा सास फेरिरहन्छौ ? कहिलेसम्म तिमीले आफ्नो जीवनलाई जलाइरहन्छौ ? आखिर कहिलेसम्म ?

र यो गुरु पूर्णिमा तिम्रो यस कहिलेसम्म भन्ने प्रश्नको उत्तर पाउने पर्व हो। यो आनन्द र सौभाग्यको पर्व हो। यो आनन्द र सौभाग्य प्राप्त गर्ने अवसर हो। यो एउटा यस्तो क्षण हो जसबाट गुञ्जिनासाथ सबैथोक प्राप्त हुन सक्दछ। जब तिमी आफ्नो जीवनको गहिराइमा पुग्नेछौ, आफ्नो प्राणसँग एकाकार हुन सक्नेछौ, आफ्नो प्राणको माध्यमबाट मलाई चिन्न सक्नेछौ र थाहा पाउन सक्नेछौ कि अघिल्ला कैयौं जन्मदेखि तिमी यिनै प्राणसँग एकीकृत छौ, पहिलोपटक यो अनुभव गर्न सक्नेछौ कि यही क्षणबाट तिमी निर्मल, पवित्र र दिव्य बन्दै समाजबाट माथि उठेर आफ्नो व्यक्तित्व स्पष्ट गर्न सक्नेछौ।

र म यस गुरु पूर्णिमामा यो सबै गर्नको लागि कृत संकल्पित छु। यस गुरु पूर्णिमामा तिमीसँगै मानसको समुद्रमा गहिरो डुबुल्की लगाउन म तयार छु। यस गुरु पूर्णिमामा तिम्रो अञ्जुली मोतीले भरिदिनको लागि म उद्यत् छु। म यस गुरु पूर्णिमामा दुर्गन्धयुक्त विषाक्त वातावरणबाट बाहिर निकालेर आनन्दको उद्यानमा उभ्याउनको लागि प्रयत्नशील छु जहाँ तिमी गुरुको सुगन्धबाट आप्लावित हुन सक्नेछौ, गहिरो सास फेर्न सक्नेछौ, आफ्नो प्राणमा आनन्दको प्राणवायु भर्न सक्नेछौ, आफ्नो रगतमा नयाँ चेतना दिन सक्नेछौ, आफ्नो जीवनमा नयाँ तरीकाबाट बोल्न सक्नेछौ, आफ्नो आँखामा एउटा नयाँ चमक, एउटा नयाँ ओज ल्याउन सक्नेछौ, तिम्रो मुहारमा दृढता आउन सक्नेछ, तिम्रो शिर गर्वसाथ उठ्न सक्नेछ, तिमी वास्तवमै राजहंस बन्न सक्नेछौ, तिमीले वास्तवमा यस मानसरोवरमा डुबुल्की लगाउन सिक्नेछौ, तिमीले वास्तवमा आफ्ना

पखेटा फटफटाउन सक्नेछौ, र यस निलो आकाशमा पूर्ण क्षमताका साथ उड्दै समस्त ब्रह्माण्डलाई आफ्नो अँगालोमा बाँध्न सक्नेछौ।

यसैको लागि नै मैले गुरु पूर्णिमामा तिमीलाई बोलाइरहेको छु, किनकि यो स्वयं तिम्रो पर्व हो। यदि शिष्य वास्तवमै शिष्य हो भने, यदि वास्तवमै ऊ मेरो आत्माको अंश हो भने, यदि वास्तवमै ऊ मेरो प्राणश्चेतना हो भने उसको पाइला कुनै पनि हालतमा रोकिन सक्दैनन्। समाजले उसको बाटो छेक्न सक्दैन। परिवारले उसको गोडामा साङ्लोले बाँध्न सक्दैन। ऊ त कुनै पनि हालतमा अगाडि बढेर गुरु चरणमा, ममा एकाकार हुनेछ किनकि यो एकाकार हुने क्रिया नै जीवनको पूर्णता हो। र यदि यस्तो हुन सकेन भने त्यो शिष्यता नै हुन सक्दैन। त्यो त कायरता हो, डरपोकपन हो, कमजोरी हो, नपुंसकता हो, र मलाई विश्वास छ मेरा शिष्यहरूसँग यसप्रकारका घिनलाग्दा शब्दहरू जोडिन सक्दैनन्।

र त्यो सबै ऋण तिमीमाथि छ। यस जन्मको मात्र होइन, अघिल्ला कैयौं जन्मको ऋण तिमीमाथि छ र यो पर्व त्यस गुरु ऋणबाट मुक्त हुने पर्व हो। यो पर्व वास्तवमा आफूलाई मुक्त बनाउने पर्व हो, वास्तवमै आनन्द प्राप्त गर्ने पर्व हो, वास्तवमै गुरुको चरणमा नमन हुने पर्व हो, र अघिल्ला कैयौं जन्मदेखि जति पनि ऋण तिमीमाथि छ, त्यसबाट पूर्णतः मुक्ति पाउने, उऋण हुने पर्व हो।

र म यस पर्वमा दुवै हात फैलाएर प्रतीक्षा गरिरहेको छु।

# पशुपतिनाथ दर्शन विधि

भगवान् पशुपतिनाथको दर्शनार्थ हामीहरू प्राय: जाने गरेका छौँ । हामीले हाम्रो भक्तिभाव र श्रद्धाभावलाई त्यहाँ गएर अर्पण गर्ने गर्छौं । तर पशुपति दर्शन कसरी गर्नुपर्छ र यसको परिक्रमा कसरी गर्नुपर्छ भन्ने सम्बन्धमा भने हामीमध्ये कतिपयलाई थाहा नहुन सक्छ । आउनुहोस्, यसबारे केही चर्चा गरौँ ।

परमाराध्य परमात्मा परमेश्वर श्री पशुपतिनाथको दर्शन दुई किसिमबाट गर्ने परम्परा रहिआएको छ । पहिले सरासर मन्दिर परिसरभित्र प्रवेश गरी त्यस क्षेत्रका पचास वटा देवीदेवताहरूको क्रमवद्ध परिक्रमा गरी श्री पशुपतिनाथको दर्शन गर्ने । यसरी परिक्रमा गर्न असमर्थ भक्तजनले भित्र प्रवेश गरी श्री पशुपतिनाथ मन्दिरको पश्चिम ढोका हुँदै मन्दिरको अर्द्ध परिक्रमा गर्दै दर्शन गर्ने प्रथा रहेको छ। श्री पशुपतिनाथको दर्शन गरी बाहिरिएर यस क्षेत्रको बाह्र स्थानमा पुन: गई देवीदेवताहरूको पूजा-दर्शन गर्नुपर्ने उल्लेख छ ।

सबैभन्दा पहिले गौशालाबाट उत्तर जाँदा आउने पहिलो चौबाटो (जहाँ प्रसिद्ध जयबागेश्वरी देवीको मन्दिर छ) पश्चिमतर्फका दुई बाटाहरूमध्ये भण्डारखालको उत्तर सीमाना हुँदै सिफल चौरतिर गएको कच्ची बाटोको दायाँपट्टि पशुपति परिक्रमाको पहिलो क्रममा दर्शन गर्नुपर्ने (१) ताम्रेश्वर महादेव विराजमान् छन् । त्यहाँबाट फर्की (२) जयबागेश्वरीको पूजा दर्शन गरिन्छ। देवी कैलाशबाट पशुपतिनाथको प्रीतिले यहाँ आई बसेकी हुन् । मन्दिरको गर्भगृहमा रहेकी अति सुन्दरी देवी मूर्तिको बायाँ छेउ केही भित्र रक्तवर्णको मानव शिर (सूँढ बिनाको) युक्त श्री गणेशको विलक्षण मूर्ति रहेको छ ।

जयबागेश्वरीको पूर्व लाग्दा भेटिने पहिलो चौबाटोको

उत्तर-पश्चिम छेउ (३) श्री भुवनेश्वरीको मन्दिर छ । सातौं शताब्दीमा लिच्छवि राजा शिवदेवद्वारा निर्मित यस मन्दिरको द्वारमा उभिई मानसिकरूपले देवीको दर्शन गर्नुपर्छ । यस मन्दिरमा पूजारीबाहेक अन्यलाई प्रवेश निषेध छ । मन्दिरभित्र रातो वस्त्रले छोपेको वेदीबाहेक प्रत्यक्षरूपमा अन्य कुनै मूर्ति विशेष देखिँदैन । यही चौबाटोको उत्तर उँभो लाग्दा कैलाशको छेउ बाटोको बायाँ श्री पशुपतिनाथको दक्षिणामूर्ति स्वरूपको मन्दिर छ। पशुपति परिक्रमाको चौथो क्रममा दर्शन गर्नुपर्ने यस मन्दिरको स्थापना राजा नृपेन्द्र मल्लको पालामा पशुपतिनाथका मूल पूजारी स्वामी विमलानन्दले गरेका हुन् । यही बाटो पछ्याउँदै जाँदा अलि पर सडकको बायाँपट्टि (५) हेमन्त भैरव, अझ केही पर दायाँ पुष्पाङ्गल पूर्व, (६) उमा कुण्ड छ । यही बाटो मोडिँदै पूर्व लाग्दा पुगिने गौरीघाटमा स्नान गरी पुल पारी दक्षिण श्लेष्मान्तक वनमा सिँढीयुक्त थुम्कोमा गौरी प्रिया (७) किराँतेश्वर शिवलिङ्ग रहेको छ। यहाँ भगवान् शिवले किराँतरूपमा वन विहार गर्नुभएको समयमा देवी पार्वतीले तपस्या गरेकी थिइन् । किराँतेश्वरको पूजाआजा गरी यस थुम्कोको केही माथि उक्लँदा पश्चिम-दक्षिण तल ओर्लदा सूर्यविम्बसहित (८) सूर्यघाट छ । घाटबाट माथि उक्लेर पुन थुम्को झरेर पूर्व लाग्दा गुह्येश्वरीघाट र गुह्येश्वरी मन्दिर पुग्छौँ । घाटमा स्नान गरी मन्दिरमा (९) श्री गुह्येश्वरीको दर्शन गर्नुपर्छ ।

राजा प्रताप मल्लले सं. १६५४ मा बनाएको यस बिना छतको मन्दिरको गजूरलाई चारवटा नागहरूले उचाली रक्षा गरिरहेका छन् । नेपालकी अधिष्ठात्री गुह्येश्वरी देवीको मन्दिरभित्र मध्य भागमा एउटा वेदी सहितको कुण्ड छ। गुह्यकालीदेवीको प्रतीक कमलाकारको यस कुण्डलाई चाँदीको कलशले छोपिराखेको हुन्छ । पूजा दर्शन्पश्चात् कुण्डको जल प्रसाद लिन पूजारीले कलश उचालिदिन्छन् । शक्तिपीठ मानिने माता गुह्यकालीको प्रतिवर्ष मंसिरकृष्ण दशमीमा रथ जात्रा हुन्छ । मन्दिरको भित्री भागमा श्री गणेश, छिन्नमस्ता, अष्टभैरवसहित अष्टमातृकाहरू र वायव्यकोणमा गुह्येश्वर (सिद्धेश्वर) महादेवका मूर्तिहरू छन् । गुह्येश्वरी मन्दिर परिसरको पश्चिमोत्तर ढोकाबाट बाहिरिई सिँढीहरू उक्लदै जाँदा बायाँतिर अनेकन शिवालय र दायाँतिर सर्वप्रथम (१०) श्री श्री महायोगी गुरु गोरखनाथको शिखर शैलीको पूर्वाभिमुख द्वार भएको मन्दिर देखिन्छ । सं. १३८५-१३९५ मा राजा जयस्थिति मल्लले निर्माण गर्न लगाएको यस मन्दिरको गर्भगृहभित्र रहेको गोरख पादुकाको दर्शन गरेमा लाखौँ गाई दान गरेको पुण्य मिल्ने लोक धारणा रहेको छ । यो मन्दिर नाथपन्थीहरूको प्रसिद्ध मठ पनि हो । यस मठको अगाडि मनकामना माताको मन्दिर पनि छ । यहाँ दर्शन गर्दा कुनै पनि सुहाँउदो वर मागेमा पाइन्छ भन्ने भनाइ छ ।

यस मृगस्थली वनक्षेत्रमा गोरखनाथ मन्दिरको केही पूर्वतिर (११) विश्वरूप मन्दिर छ । भगवान् विश्वविराट्को दर्शन गरी बाहिर निस्की बहिरा गणेश स्थानलाई दाहिने पारी पूर्व लाग्दा कच्ची बाटैबाटो पर भक्त ध्रुवले तपस्या गरेको अति शान्तिदायक शिवपुरी बाबाको समाधिस्थल भएको बाक्लो ध्रुवस्थलीको जङ्गल भेटिन्छ । समाधिस्थलबाट १ सय पच्चीस फिट जति पर पत्थरका (१२) दुई स्तन भेटिन्छन् । श्री हरिबाट वरदान पाई स्वर्ग जान तयार ध्रुवले जगत्जननी माता उमाले जमीनमा प्रकट गराई दिनुभएको स्तनबाट दूध पिउनुभएको थियो । यस स्थानको केही पर दूधको स्वाद आउने एउटा कुण्ड छ । यहाँ इनार बनाई शिवपुरी बाबाको आश्रमका लागि पानीको व्यवस्था मिलाइएको छ । यहाँ गल्फकोर्ट नाघेर जान सकिन्छ । यस क्षेत्रबाट फर्की अघिकै श्लेषमान्तक वन विश्वविराट् मन्दिर जानु अघिको स्थानमा पुग्दा आर्यघाटतिर ओर्लने सिँढीको मुखैमा (छेउ) (१३) रातो वर्णका श्री गणेशको दर्शन गरी ढुङ्गेसिँढी ओर्ली तल बायाँपट्टि वैरागी मठसहित (१४) तीन मन्दिरको समूह रहेको स्थानमा पुगिन्छ ।

पहिलो मन्दिर लवकुशसहित श्रीराम मन्दिर, दोस्रो राम परिवारको र तेस्रो श्री लक्ष्मीनारायणको मन्दिर हो । यस क्षेत्रबाट फर्कने क्रममा वागमती पुल पारी बायाँपट्टि छेउमै (१५) गर्भगृहमा निराकार मण्डलाकार यन्त्रसहितको वत्सलामाईको मन्दिर छ। आफ्नो प्रीतिमा बसेकी देवी पार्वतीदेखि खुशी हुँदै भगवान् शिवले वत्सलाको नाम दिनुभएको र देवीको दर्शनपश्चात् श्री शिवको दर्शन गरेमा स्वत: कैलाशवासी हुने शिव वरदान रहेको छ। प्रियादेखि खुशी रहनुभएका पशुपतिनाथले वर्षमा एकपटक भेट तथा उपहार दिनुहुन्छ । प्रतिवर्ष चैत्रशुल्क प्रतिपदा वा द्वितीयामा वत्सलामाईको खटजात्रा हुन्छ। वत्सलाको दक्षिण आँगनमा (१६) आकाश भैरव छन्। वत्सलाको पूजा गरी आकाश भैरव (१७) मङ्गलागौरी (१८) नील सरस्वतीको दर्शन गरी वत्सला मन्दिरको अगाडि रहेको जम्बुद्वीप र कागेश्वरीलाई दायाँ पारी आर्यघाटमा स्नान तर्पणादि गर्नुपर्ने व्यवस्था छ।

माता पार्वतीका सखी खर्वरीले स्नान गरेकीले आर्यघाटको पूर्व खर्वरी तीर्थ नाम रह्यो । बागमतीको पश्चिम किनारामा दर्शन र स्पर्श मात्र गर्नाले शिवलोक वास हुने (१९) मृगेश्वर महादेवको मन्दिरको भित्रबाट आएको मृगोदक र खर्वरी तीर्थ (सायद अदृश्य) मिसिने हुँदा यहाँ स्नान गरेमा त्रिवेणी स्नानको फल मिल्छ भने मृगोदक तीर्थको जल पिएमा पशुयोनिमा जन्म लिनु पर्दैन। यस मन्दिरभित्र पापाचारबाट मुक्त हुन बसेका विरूपाक्षको मूर्ति छ। छेउमै वर्षको एकपल्ट जात्रा हुने गरी राजा प्रताप मल्लले बनाउन लगाएको गङ्गा यमुनाको मूर्तिसहित (२०) गङ्गामाईको मन्दिर छ । तत्पश्चात् सिँढी उक्ली पूर्व ढोकाबाट पशुपतिनाथ मन्दिर प्राङ्गणमा प्रवेश गरिन्छ। प्रवेश गरी पहिले (२१) लाल गणेश, गुह्येश्वरी नगएको भए श्री पशुपतिनाथको छानामुनीको कलश र पादुका, बायाँपट्टिको (२२) श्रीकृष्ण, दायाँपट्टिको (२३) सूर्यनारायण मन्दिर (२४) कोटेश्वर, (२५) भृङ्गी, (२६) जोरेश्वर (त्रिशिर) महादेव, पूर्वउत्तरमा विराजमान (२७) नृत्यनाथ भगवान्, (२८) अन्नपूर्ण तथा सूर्य नारायणको (२९) अर्धनारीश्वर, (३०) त्रिपुरसुन्दरीको दर्शन गरी श्री पशुपतिनाथ मन्दिरको गजूर दर्शन गर्नुपर्छ।

आदि युगमा गरुडले वासुकीलाई च्यापी उदाउँदै ल्याउँदा फुत्किई श्री पशुपतिनाथको शरणमा आई तप गरिरहँदा श्री पशुपतिनाथ खुशी भई वासुकीको नाममा शहर बसाई त्यहीं बस्ने र (३१) बासुकीको दर्शन गरी श्री पशुपतिनाथको दर्शन गरे मात्र फल मिल्ने आशीर्वाद दिनुभयो । कलिगत ३८२५ राजा गुणकामदेवले देशदेशावरमा विजय प्राप्त गरी संकलन गरेको अकुत सम्पत्ति (५२ करोड धन) श्री पशुपतिनाथ मन्दिरको उत्तर-पूर्व कुनाको 'अचल' पर्वतभित्र राखी यहीँ बासुकी नागको सुन्दर मूर्ति स्थापना गरी भण्डारा मन्दिर बनाएका थिए। बासुकी दर्शनपछि दक्षिण सिँढी ओर्लेर पूर्व ढोकासँगैको भवनमा बायाँपट्टि झ्यालबाट (३२) सिद्धेश्वर महादेव र पूर्व ढोका सामुन्ने (३३) शेषशायी (बूढानीलकण्ठ) भगवान् नारायण, (३४) चाँगुनारायण र (३५) सरस्वतीमाताको दर्शन गर्नुपर्छ । त्यसपछि मुक्तिमण्डपको बार्दलीबाट बागमतीको वारिपारी दृश्यावलोन गर्दै बार्दलीको ठीक मुनि गङ्गामाईको मन्दिरको छतको रूपमा रहेको (३६) श्री यन्त्रको दर्शन गरी (३७) मुक्तिमण्डपका सन्तानेश्वर महादेवमा जलार्पण र पूजा गरी छेवैको श्रीकृष्णको दर्शन गर्नुपर्छ। माथि उल्लिखित देवदेवीहरूको दर्शन गर्न नसकेमा मुक्तिमण्डपमा बसी सबै देवदेवीहरूलाई स्मरण गरी क्षमा प्रार्थना गर्नुपर्छ।

जगत्जननी माता पार्वतीको सुन्दरतामा मोहित भएका जालन्धरले कुटनीति गरेर राहुलाई पठाएको थाहा पाई क्रोधित भगवान् शिवको आँखीभौंबाट प्रकट भएका भयानक महापुरुष (३८) कीर्तिमुख भैरवले राहुलाई भक्षणको लागि लखेट्न थाले। डरले त्रसित भएका राहुले अन्ततः शिवको स्तुति गर्दा प्रसन्न हुनुभएका भगवान् शिवको कृपाले कीर्तिमुख भैरवको आक्रमणबाट अरूको दूत भएका राहुले छुटकारा पाए। कीर्तिमुख भैरवले आफूलाई भोक लागेको हुँदा केही भोजनको लागि

भगवान् शिवसँग प्रार्थना गर्दा आफ्नै हात खुट्टाको मासु खाने आज्ञानुसार खाँदाखाँदा गर्धन माथिको भाग मात्र बाँकी रहन गयो । यस्ता भैरवको दर्शनपछि मात्र शिव दर्शनको फल प्राप्त हुने शिव वचन रहेको छ ।

आकाश मार्गमा पर्ने सम्पूर्ण चिजहरूलाई ग्रास बनाउने भैरवलाई तान्त्रिक विधिले घोप्टो पारी बन्धनमा राखिएका (३९) आकाश भैरव, (४०) शीतलामाईको दर्शन गरी सामुन्नेको ढोका (दक्षिण ढोका) बाहिर आई ८४ योनिमा जन्म लिनु नपर्ने गरी (४१) चौसट्ठी यन्त्रमा स्थापित ५५१ शिवलिङ्गको परिक्रमा गर्नुपर्दछ । त्यसपछि पुनः ढोकाबाट भित्र पसी पशुपतिनाथको दक्षिण उग्ररूप भएकाले शान्ति र रक्षाका लागि स्थापना गरिएको (४२) उन्मत्त भैरवको दर्शन गर्नुपर्छ । श्री पशुपतिनाथको दर्शन गर्न असमर्थ भक्तहरूले उन्मत्त भैरव मन्दिरका पेटीमा बसी क्षमा प्रार्थनासहित सत्य मनले भावमय भई श्री पशुपतिनाथ मन्दिरको गजुर दर्शन गर्नाले पशुपतिनाथ क्षेत्र परिक्रमाको पूर्ण फल मिल्छ । त्यसपछि अलि पर (४३) व्यास आसन यज्ञशाला घुमी (४४) झंकेश्वर महादेव, (४५) श्री दक्षिणकाली माता, (४६) श्री गणेश र (४७) अष्ट मातृकालगायत (४८) नवग्रह मण्डल, (४९) श्री हनुमानजी, (५०) सत्यनारायण समेतको दर्शन गरी मात्र (५१) श्री पशुपतिनाथको अर्ध परिक्रमासहित दर्शन गर्ने मान्यता छ ।

श्री पशुपतिनाथ मन्दिरको चारै ढोका खुला भएको अवसरमा मन्दिरको अर्धार्द्ध परिक्रमाले दर्शन गर्ने मान्यताअनुरूप दक्षिण ढोकाबाट प्रवेश गरी पशुपतिनाथको अघोरमूर्तिको दर्शन गरी पश्चिम ढोकातिर आई वामदेवमूर्तिको दर्शन गर्ने, त्यसपछि दक्षिण ढोका हुँदै पूर्व ढोकामा आई तत्पुरुषको दर्शन र उत्तर ढोकामा गई सद्योजातमूर्तिको दर्शन गरेर निस्की ठूलो नन्दीलाई दायाँ पारेर मन्दिरको पश्चिमी मूल ढोका आई पूर्व हेरेर परिक्रमा दर्शनको सिलसिलामा भएका गल्ती त्रुटिहरूप्रति क्षमा प्रार्थना गर्दै श्री पशुपतिनाथ मन्दिरको गजूर दर्शन गरेपछि मन्दिर परिसर बाहिर निस्कने प्रावधान रहेको पाइन्छ ।

पशुपतिनाथ मन्दिर परिसर बाहिर आएपछि अलि पर दायाँ केही सिँढी चढेर रुद्रगारेश्वर भगवान्को दर्शन गरी फर्केर केही पश्चिम जाँदा दायाँपट्टि शंकराचार्यको मन्दिर देख्छौं । त्यसपछि अझ अलि पर क्षेत्रपाल झंकेश्वरीको दर्शन गरी दक्षिण अनि पश्चिम हुँदै आर्यघाटतर्फ लाग्दा वत्सलामाई पुग्नु अगावै भस्मेश्वर महादेवको दर्शन गर्नु पर्छ । भस्मेश्वरको पूर्व चितामा सज्जन मानिसको लास जलि रहँदा भस्मेश्वर क्षेत्र धूम्रमण्डित हुँदा मृतकको आत्माले कैलाश वास पाउने मान्यता रहेको छ । यसपछि वागमती किनारै किनार जाँदा पूर्वजन्मको छायाँ देखिने इनार छ । त्यस इनारमा राजाहरूले हेर्दा आफ्नो पूर्व छायाँ अप्रिय देखिएकोले इनारमाथि राजा शंकरदेवले अति सुन्दर चिल्लो शिलाको विराटेश्वर शिवलिङ्ग र घाट स्थापना गरिदिए । यसै नजिक राजा अंशुवर्माले बलि निषेध जयवागेश्वरीको रहस्य मूर्ति र बलिग्राह्य रहने गरी स्थापना गरिएको नवदुर्गाको रहस्यमूर्तिका मन्दिर राजराजेश्वरीको नामले प्रख्यात् छ । अति नै प्रत्यक्षकी यी नवदुर्गाका दर्शनपछि दक्षिणतिर लाग्दा रिङ्गरोडमुनि श्री पशुपतिनाथका नवशक्ति पीठमध्येको महालक्ष्मी पीठस्वरूप अति प्रत्यक्षकी देवी वज्रेश्वरी देखिन्छन् । यो परिसरलाई पिङ्गलास्थान पनि भनिन्छ । देवीको दर्शनपछि फर्कदा रिङ्गरोडको दायाँ बाटो तल रहेको श्री मङ्गलागौरीको र गुरु गोरखनाथको मूर्ति सहितको मन्दिर दर्शन गरी वनकालीको वनगणेश र केही पश्चिमतर्फ विराजमान वनकाली माताको दर्शन गर्नुपर्छ । यसरी क्रमबद्धरूपले श्री पशुपतिनाथ र उहाँको नजिकका देवदेवीहरूको पूजा दर्शन परिक्रमा गर्दा अति आनन्द, शान्तिको अनुभुति हुन्छ । जय गुरुदेव !

**(नोटः परिच्छेदका बीचबीचमा संकेत गरिएको संख्या परिक्रमा गर्नुपर्ने देवदेवीहरुको क्रमबद्धता हुन् ।)**

*स्रोतः श्री पशुपतिनाथ र परिक्रमा दर्शन । लेखक–हरिभक्त सिग्देल 'महेश'*

# के तपाईं शिव पूजन गर्दै हुनुहुन्छ ? ध्यान दिनुस् है..

### शिव पूजनका लागि विहित पत्र-पुष्प

भगवान् शंकरलाई फूल चढाउनु अति महत्त्वपूर्ण छ। बताइएको छ कि तपःशील सर्वगुणसम्पन्न वेदमा निष्णात् कुनै ब्राह्मणलाई सय सुवर्ण दान (एक सुवर्ण बराबर १६ माशा वा एक कर्ष) गर्नाले जुन फल प्राप्त हुन्छ, त्यो भगवान् शंकरलाई सय फूल चढाउनाले प्राप्त हुन जान्छ। कुन कुन पत्र-पुष्प भगवान् शिवका लागि विहित हुन्छन् र कुन कुन निषिद्ध हुन् भन्ने कुराको जानकारी हुनु शिवभक्तका लागि अति नै आवश्यक हुन्छ।

भगवान् विष्णुका लागि केवल केतकी र केवडेलाई छोडेर जति प्रकारका पत्र-पुष्प विहित छन्, ती सबै भगवान् शंकरलाई पनि चढाइन्छन्।

शास्त्रमा भगवान् शिवलाई केही प्रकारका फूल चढाउनाले प्राप्त हुने फलको तारतम्य बताइएको छ। जस्तै, दस सुवर्ण परिमाण बराबरको स्वर्ण दानको फल एउटा आँकको फूल चढाउनाले प्राप्त हुन्छ। हजार आँकको फूलको अपेक्षा एक कनेरको फूल, हजार कनेरको फूलको अपेक्षा एउटा बेलपत्र चढाउनाले फल प्राप्त हुन्छ र हजार बेलपत्रको अपेक्षा एउटा गूमा फूल (द्रोण पुष्प) हुन्छ। यसप्रकार हजार गूमाभन्दा बढी एउटा चिचिडा, हजार चिचिडा (अपामार्ग) भन्दा बढी एउटा कुशको फूल, हजार कुशको फूलभन्दा एउटा शमीको पात, हजार शमीको पातभन्दा एउटा नीलकमल, हजार नीलकमलभन्दा बढी एक धतुरो, हजार धतुरोभन्दा एउटा शमीको फूल हुन्छ। अन्तमा यो भनिएको छ कि फूलका समस्त जातिमा सबैभन्दा राम्रो नीलकमल हो। (**सर्वासां पुष्पजातीनां प्रवरं नीलमुत्पलम्॥** —वीरमित्रोदय, पूजाप्रकाश)

भगवान् व्यासले कनेरको कोटिमा चमेली, मौलसिरी, पाटला, मदार, श्वेतकमल, शमीको फूल र ठूलो भटकटैयालाई पनि राखेका छन्। यसैप्रकार धतुरोको कोटिमा नागचम्पा र पुनागलाई मानेका छन्।

शास्त्रमा भगवान् शंकरको पूजामा मौलसिरी (बकबकुल) को फूललाई नै अधिक महत्त्व दिइएको छ । भविष्यपुराणमा भगवान् शंकरलाई चढाउन योग्य अन्य फूलहरूको नाम पनि दिइएको छ– करवीर (कनेर), मौलसिरी (आँक), धतुरो, पाढर (पाटला को अर्थ पाढर हुन्छ, कोही यसलाई गुलाब पनि भन्छन्), ठूलो कटेरी, कुरैया, कास, मन्दार, अपराजिता, शमीको फूल, कुब्जक, शंखपुष्पी, चिचिडा, कमल, चमेली, नागचम्पा, चम्पा, खस, तगर, नागकेसर, किंकिरात (करंटक अर्थात् पहेँलो फूल भएको कटसरैया) गूमा, शीशम, गूलर, जयन्ती, बेला, पलाश, बेलपत्ता, कुसम्भ-पुष्प, कुङ्कुम अर्थात् केसर, नीलकमल र रातो कमल । जल एवं स्थलमा उत्पन्न सबै प्रकारका सुगन्धित फूलहरू सबै भगवान् शंकरलाई प्रिय हुन्छन् ।

**शिवार्चनमा निषिद्ध पत्र-पुष्प** :

कदम्ब, सारहीन फूल वा कठूमर, केवडा, शिरीष, तिन्तिणी, बकुल (मौलसिरी), कोष्ठ, कैथ, गाजर, बहेडा, कपास, गंभारी, पत्रकंटक, सेमल, अनार, धव, बसंत ऋतुमा फुल्ने कंद-विशेष, कुंद, जूही, मदन्ती, सज र दोपहरियाको फूल भगवान् शंकरलाई चल्दैन ।

**कदम्ब, बकुल र कुन्दमाथि विशेष विचार** :

यी पुष्पहरूबारे कतै विधान र कतै निषेध गरिएको पाइन्छ । अतः विशेष विचार, चिन्तन गरेर निष्कर्ष प्रस्तुत गरिन्छ–

कदम्ब– शास्त्रको एउटा वचन पाइन्छ– **कदम्बकुसुमैः शम्भुमुन्मत्तैः सर्वसिद्धिभाक् ।**' अर्थात् कदम्ब र धतूरोको फूलबाट पूजा गर्नाले सबै सिद्धि प्राप्त हुन्छ । शास्त्रको अर्को वचन यसप्रकार छ–

कदम्ब–शास्त्रको अर्को वचन पनि छ–

**अत्यन्तप्रतिषिद्धानि कुसुमानि शिवार्चने । कदम्बं फल्गुपुष्पं च केतकं च शिरीषकम् ॥**

अर्थात्, कदम्ब तथा फल्गु (गन्धहीन आदि) फूल शिवको पूजनमा अत्यन्त निषिद्ध छ । यसप्रकार एक वचनबाट शिव पूजनमा कदम्बको विधान र अर्को वचनमा विषेध गरिएको पाइन्छ जुन परस्पर विरुद्ध प्रतीत हुन्छ ।

यसको परिहार वीरमित्रोदयकारले कालविशेषद्वारा यसप्रकार गरेको पाइन्छ– यसको कथनको तात्पर्य यो हो कि कदम्बको जुन विधान गरिएको छ, त्यो केवल भाद्रपदमास– मास-विशेषमा मात्र हो । यस पुष्प विशेषको महत्त्व बताउँदै देवीपुराणमा भनिएको छ–

**'कदम्बैश्चम्पकैरेवं नभस्ये सर्वकामदा ।'**

अर्थात् 'भाद्रपदमासमा कदम्ब र चम्पाबाट भगवान् शिवको पूजा गर्नाले सबै इच्छा पूरा हुन्छन् ।'

यसप्रकार भाद्रपदमासमा विधि चरितार्थ हुन्छ र भाद्रपदमासभन्दा भिन्न महिनामा निषेध चरितार्थ हुन जान्छ । यसरी दुवै वचनमा कुनै विरोध रहँदैन ।

'सामान्यतः **कदम्बकुसुमार्चनं यत्तद् वर्षर्तुविषयम् । अन्यदा तु निषेधः । तेन न पूर्वोत्तरवाक्यविरोधः ।**' (वीरमित्रोदय, पूजाप्रकाश, पृ० २१६)

बकुल (मौलसिरी)– यही कुरा बकुलसम्बन्धी विधि-निषेधमाथि पनि लागू हुन्छ । आचारेन्दुमा 'बक'को अर्थ 'बकुल' दिइएको छ र बकुलको अर्थ हो– 'मौलसिरी' । शास्त्रको वचन छ–

**'बकपुष्पेण चैकेन शैवमर्चनमुत्तमम् ।**

अर्को वचन पनि छ– **'बकुलैर्नार्चयेद् देवम् ।'**

पहिलो वचनमा मौलसिरीको शिव पूजनमा विधान गरिएको छ भने अर्को वचनमा निषेध । यसप्रकार आपाततः पूर्वापर-विरोध प्रतीत हुन्छ । यसको पनि परिहार कालविशेषद्वारा हुन जान्छ किनकि मौलसिरी चढाउने विधान सायंकालमा गरिएको छ– **'साहाह्न बकुलं शुभम् ।'** यसप्रकार सायंकालमा विधि चरितार्थ हुन्छ भने भिन्न समयमा निषेध चरितार्थ हुन जान्छ ।

कुन्द– कुन्दको फूलका लागि पनि उपर्युक्त पद्धति व्यवहरणीय छ । माघ महिनामा भगवान् शंकरलाई कुन्द चढाउन सकिन्छ, अरू महिनामा होइन । वीरमित्रोदयले लेखेका छन्–

**कुन्दपुष्पस्य निषेधेऽपि माघे निषेधाभावः ।**

**पुष्पादि चढाउने विधि** :

फूल, फल र पात जसरी फल्छन्, फुल्छन् त्यसरी नै यिनीहरूलाई चढाउनुपर्दछ । उत्पन्न हुने समयमा यिनीहरूको मुख माथितिर हुन्छ । त्यसैले चढाउने बेला पनि यिनीहरूको मुखलाई माथितिर नै फर्काउनुपर्छ । यिनीहरूको मुखलाई तलतिर झुकाउनु हुँदैन (**पत्रं वा यदि वा पुष्पं फलं नेष्टमधोमुखम् ।**) । दूबो र तुलसीदललाई आफूतिर र बेलपत्रलाई तलतिर मुख गरेर चढाउनुपर्दछ (**तुलस्यादिपत्रम्**

**फूल, फल र पात जसरी फल्छन्, फुल्छन् त्यसरी नै यिनीहरुलाई चढाउनुपर्दछ। उत्पन्न हुने समयमा यिनीहरुको मुख माथितिर हुन्छ। त्यसैले चढाउने बेला पनि यिनीहरुको मुखलाई माथितिर नै फर्काउनुपर्छ। यिनीहरुको मुखलाई तलतिर झुकाउनु हुँदैन। दूबो र तुलसीदललाई आफूतिर र बेलपत्रलाई तलतिर मुख गरेर चढाउनुपर्दछ। यीभन्दा भिन्न पातहरुलाई माथितिर मुख गरेर वा तलतिर मुख फर्काएर दुवै प्रकारले चढाउन सकिन्छ।**

**आत्माभिमुखं न्युब्जमेव समर्पणीयम्** । –सारदीपिका) । यीभन्दा भिन्न पातहरूलाई माथितिर मुख गरेर वा तलतिर मुख फर्काएर दुवै प्रकारले चढाउन सकिन्छ । दाहिने हत्केलालाई माथि फर्काएर माझी, साहिँली र बूढी औँलाको सहायताले फूल चढाउनुपर्दछ । त्यसरी नै चढाइएका फूलहरूलाई झिक्दा बूढी औँला र चोरी औँलाको सहायताले उतार्नुपर्दछ (**अङ्गुष्ठतर्जनीभ्यां तु निर्माल्यमपनोदयेत् ।** –कालिकापुराण) ।

**फूल टिप्ने मन्त्र** :

प्रात:कालिक स्नानादि कृत्यहरूपछि देवपूजनको विधान छ। तसर्थ, स्नानपछि तुलसी, बेलपत्र र फूल टिप्नुपर्छ। फूल टिप्नुभन्दा पहिले हात खुट्टा धोएर आचमन गर्नुपर्छ, पूर्वतिर मुख गरेर हात जोडेर यो मन्त्र जप्नुपर्छ–

**मा नु शोकं कुरुष्व त्वं स्थानत्यागं च मा कुरु । देवतापूजनाथार्य प्रार्थयामि वनस्पते ॥**

पहिलो फूल टिप्ने बेलामा 'ॐ वरुणाय नम:', दोस्रो फूल टिप्ने बेलामा 'ॐ व्योमाय नम:' र तेस्रो फूल टिप्ने बेलामा 'ॐ पृथिव्यै नम:' भन्नुपर्छ ।

**बेलपत्र टिप्न मन्त्र** :

**अमृतोद्भव श्रीवृक्ष महादेवप्रिय: सदा । गृह्णामि तव पत्राणि शिवपूजार्थमादरात् ॥** (आचारेन्दु)

**बेलपत्र टिप्ने निषिद्ध काल** :

चतुर्थी, अष्टमी, नवमी, चतुर्दशी र अमावस्या तिथिमा, संक्रान्तिमा र सोमबार बेलपत्र टिप्न हुँदैन । तर बेलपत्र भगवान् शंकरलाई अति नै प्रिय भएको हुनाले निषिद्ध दिनको अघिल्लो दिनमा टिपिएका बेलपत्र चढाउनुपर्दछ । शास्त्रले यहाँसम्म छुट दिएको छ कि नयाँ बेलपत्र छैन भने चढाइसकेका बेलपत्रलाई पनि धोएर पुन: पुन: चढाउन सकिन्छ ।

**बासी जल, फूलको निषेध** :

जुन फूल, पात र जल बासी भएको छ, त्यसलाई चढाउन हुँदैन। तर तुलसीदल र गङ्गाजल कहिल्यै पनि बासी मानिँदैन। तीर्थको जल पनि बासी मानिँदैन। वस्त्र, यज्ञोपवीत र आभूषणमा पनि निर्माल्यको दोष लाग्दैन। मालीको घरमा राखिएका फूलमा बासी दोष लाग्दैन । मणि, रत्न, सुवर्ण, वस्त्र आदिबाट बनाइएका फूल बासी हुँदैन ।

नारदजीले 'मानस' (मनद्वारा भावित) फूललाई सबैभन्दा श्रेष्ठ फूल मानेका छन्। उनले देवराजलाई इन्द्रलाई बताएका छन् कि लाखौँ-करोडौँ बाह्य फूललाई चढाएर पाइने फल केवल एउटा मानस फूल चढाउनाले प्राप्त हुन्छ। यसबाट मानस फूल नै उत्तम हो भन्ने सिद्ध हुन्छ। मानस फूल बासी आदि दोषबाट पनि रहित हुन्छन्। यसैले पूजा गर्ने बेलामा मनैबाट फूल चढाउने अद्‌भुत आनन्द पनि प्राप्त गर्ने प्रयत्न गर्नुपर्छ। *(कल्याण, शिवोपासनाङ्क, वर्ष ६७, संख्या १-२ )*

# यस्तो छ चातुर्मास्य माहात्म्य

संसारमा मनुष्य जन्म दुर्लभ छ। त्यसमा पनि उत्तम कुलमा जन्म लिनु अझै दुर्लभ छ। कुलीन भएर पनि दयालु स्वभावको हुनु झनै दुर्लभ छ। यी सबै भएर पनि कल्याणमय सत्संग प्राप्त हुनु त अति दुर्लभ छ। जहाँ सत्संग छैन, भगवान्को भक्ति छैन र व्रत छैन, त्यहाँ कल्याणको प्राप्ति दुर्लभ हुन्छ। विशेषतः चतुर्मास व्रत गर्ने मानिसलाई उत्तम मानिएको छ। संसारमा मनुष्यको जन्म र भगवान्को भक्ति दुवै नै दुर्लभ छन्।

मानिसहरु गंगा स्नान गर्छन्। नेपालका वाग्मती, स्वप्नतीर्थ (सपनतीर्थ), देवघाट आदि र भारतका पुष्कर, प्रयाग अथवा कुनै महातीर्थको जलमा स्नान गर्नु पुण्यप्रद मानिन्छ। नर्मदा, भाष्कर क्षेत्र, प्राची, सरस्वती तथा समुद्र संगममा एक दिन भए पनि जसले चतुर्मासमा स्नान गर्दछ, उसको पाप नष्ट हुन्छ। जसले नर्मदामा एकाग्रचित्त भएर तीन दिन मात्रै भए पनि चौमासाको स्नान गर्दछ, उसको पाप सहस्र टुक्रामा विभक्त हुन्छ। जसले गोदावरी नदीमा सूर्योदयको बेला चतुर्मासमा पन्द्र दिनसम्म स्नान गर्दछ, ऊ कर्मजनित शरीरको परित्याग गरेर भगवान्को धाममा जान्छ।

जसले तिल एवं अमला मिश्रित जलमा अथवा बेलपत्र मिश्रित जलले चतुर्मासमा स्नान गर्दछ, उसमा दोषको लेश मात्र पनि बाँकी रहन्न। चतुर्मासमा पापनाशिनी गंगाको माहात्म्य विशेषरुपमा प्रकट हुन्छ। चतुर्मासमा भगवान् नारायण जलमा शयन गर्नुहुन्छ, अतः जलमा भगवान् विष्णुको तेजको अंश व्याप्त रहन्छ। चतुर्मासमा गंगामा गरिएको स्नान सबै तीर्थको भन्दा अधिक फलदायक हुन्छ। बिनास्नानको जुन पुण्यकार्य, शुभकार्य गरिन्छ, त्यो निष्फल हुन्छ, त्यसलाई राक्षसले ग्रहण गर्दछ।

स्नानेन सत्यमाप्नोति स्नानं धर्मः सनातनः
धर्मान्मोक्षफलं प्राप्त पुनर्नैवावसीदति ॥
(स्क. पु. ब्रा. खण्ड १/२५)

स्नानबाट मानिसले सत्य प्राप्त गर्दछ। स्नान सनातन धर्म हो, धर्मबाट मोक्षरुप फल पाएर मानिस फेरि दुःखी हुँदैन। राति र सन्ध्याकालमा ग्रहण भएमा मात्र स्नान गर्नुपर्छ। गरम पानीले पनि स्नान गर्नुहुन्न।

चतुर्मासमा विशेष गरेर जलको शुद्धि हुन्छ। यस बेला तीर्थ र नदी आदिमा स्नान गर्नुको विशेष महत्त्व छ। नदीको संगममा स्नानपश्चात् पितृ र देवताहरुलाई तर्पण गरेर जप, हवन आदि गर्नाले अनन्त फलको प्राप्ति हुन्छ।

चतुर्मास सबै गुणले युक्त समय हो। यसमा धर्मयुक्त श्रद्धाबाट पवित्र शुभ कर्मको अनुष्ठान गर्नुपर्दछ। सत्संग, भक्ति, गुरु, देवता र अग्निको तर्पण, गोदान, वेदपाठ, सत्कर्म, सत्यभाषण, गोभक्ति र दानमा प्रीति यी सबै

सदा धर्मका साधन हुन् । देवशयनीबाट देवबोधनी एकादशीसम्म उक्त धर्मको साधन एवं नियम महान् फल दिने हुन्छ ।

यदि मनुष्य चतुर्मासमा भक्तिपूर्वक योगको अभ्यासमा तत्पर भएन भने निःसन्देह उसले अमृतलाई गुमाउँछ ।

सत्यमेकं परो धर्मः सत्यमेकं परं तपः ।
सत्यमेकं परं ज्ञानं सत्ये धर्मः प्रतिष्ठितः ।
धर्ममूलमहिंसा च मनसा तां च चिन्तयन् ।
कर्मणा च तथा वाचा तत एतां समाचरेत् ॥
(स्क. पु. ब्रा. २/१८-१९)

एकमात्र सत्य नै परमधर्म हो । एक सत्य नै परम तप हो । केवल सत्य नै परम ज्ञान हो र सत्यमा नै धर्मको प्रतिष्ठा छ । अहिंसा धर्मको मूल हो । यसैले यस अहिंसालाई मन, वाणी र क्रियाद्वारा आचरणमा ल्याउनुपर्दछ । अरुको धनमाथि कब्जा र चोरी आदि पापकर्म सदा सबैका लागि वर्जित छन् । चतुर्मासमा यी पापकर्मबाट विशेषरुपमा बच्नुपर्दछ । गर्न नहुने कर्मको आचरण विद्वान्हरुका लागि सदा त्याज्य छ । जो सम्पूर्ण कार्यमा निष्काम भावले प्रवृत्त हुन्छ, जसमा अहं बुद्धिको आभाव छ, जसले बुद्धिको नेत्रले नै देख्दछ, यस्तो पुरुष नै महाज्ञानी र योगी हुन् । मनुष्य कामनाको त्यागद्वारा क्रोध र लोभलाई जित्नुपर्छ, शान्तिद्वारा मोह र मनलाई जितेर विचारद्वारा शान्तिभावलाई अपनाउनुपर्दछ । सन्तोषबाट पनि शान्तिको उदय हुन्छ । जसले आफ्नो कोमलता र सरलताद्वारा ईर्ष्याभावलाई दबाउँछन् उनीहरु नै मुनीश्वर हुन् ।

चतुर्मासमा जीव दया विशेष धर्म हो । प्राणीहरुसँग द्रोह गर्नु कहिल्यै धर्म मान्न सकिन्न । यसैले, मनुष्यले सर्वथा प्रयत्न गरेर प्राणीहरुप्रति दयालु हुनुपर्दछ । जुन धर्ममा दया छैन, त्यो दूषित मानिएको छ । सबै प्राणीहरुप्रति आत्मभाव राखेर सबैमाथि दया गर्नु सनातन धर्म हो जुन सबैबाट सदा सेवनयोग्य छ ।

सबै धर्ममा दानधर्मलाई विद्वान्हरु प्रशंसा गर्दछन् । चतुर्मासमा अन्न, जल, गौदान, प्रतिदिन वेदपाठ र अग्निमा हवन यी सबै महान फल दिने हुन्छन् । सद्धर्म, सत्कथा, सत्पुरुषहरुको सेवा, सन्तहरुको दर्शन, भगवान् विष्णुको पूजन सत्कर्महरुमा संलग्न रहनु र दानमा अनुराग हुनु यी सबै कुरा चतुर्मासमा दुर्लभ बताइएको छ ।

जसले तिल एवं अमला मिश्रित जलमा अथवा बेलपत्र मिश्रित जलले चतुर्मासमा स्नान गर्दछ, उसमा दोषको लेश मात्र पनि बाँकी रहन्न । चतुर्मासमा पापनाशिनी गंगाको माहात्म्य विशेषरुपमा प्रकट हुन्छ । चतुर्मासमा भगवान् नारायण जलमा शयन गर्नुहुन्छ, अतः जलमा भगवान् विष्णुको तेजको अंश व्याप्त रहन्छ । चतुर्मासमा गंगामा गरिएको स्नान सबै तीर्थको भन्दा अधिक फलदायक हुन्छ । बिनास्नानको जुन पुण्यकार्य, शुभकार्य गरिन्छ, त्यो निष्फल हुन्छ, त्यसलाई राक्षसले ग्रहण गर्दछ ।

चतुर्मासमा दूध, दही, घिउ एवं महीको दान महाफल दिने हुन्छन् । जसले चतुर्मासमा भगवान्‌को प्रीतिका लागि विद्यादान, गोदान र भूमिदान गर्दछ, उसले आफ्नो पूर्वजहरुको उद्धार गर्दछ । विशेषतः चतुर्मासमा अग्निमा आहुति, भगवद्‌भक्त एवं पवित्र ब्राह्मणलाई दान दिनु र गाईको सेवा गर्नुपर्छ ।

मनुष्य सदा प्रिय वस्तुको इच्छा गर्दछ । जसले चतुर्मासमा आफ्ना प्रिय भोगलाई श्रद्धा एवं प्रयत्नपूर्वक त्याग गर्दछ, ऊद्वारा त्यागिएका ती वस्तु उसलाई अक्षयरुपमा प्राप्त हुन्छ। गृहस्थले तामाको पात्रमा कदापि भोजन गर्न हुँदैन। चतुर्मासमा तामाको थालमा भोजन विशेषरुपमा त्याज्य छ। धातुको पात्रलाई त्यागेर पलाँसपत्र, मदारपत्र, वटपत्रमा भोजन गर्नाले अनुपम फल प्राप्त हुन्छ । खुर्सानी, उडद र चनाको सेवन वर्जित छ । कालो, निलो रङको वस्त्र त्याग्नुपर्दछ। निलो वस्त्रलाई देख्नाले जुन दोष लाग्छ त्यसको शुद्धि सूर्यनारायणको दर्शनबाट हुन्छ। कुसुम्भ (रातो) रङ र केसरको त्याग गर्नुपर्दछ। भूमिशयन गर्नुपर्दछ। असत्य भाषणको त्यागबाट मोक्षको ढोका खुल्छ ।

परनिन्दा महापापं परनिन्दा महाभयम् । परनिन्दा महद्‌दुखं न तस्याः पातकं परम् ॥

(स्क. प. ब्रा ४/२५)

चतुर्मासमा परनिन्दाको विशेषरुपमा परित्याग गर्नुपर्दछ । परनिन्दा महापाप हो। परनिन्दा महान् भय हो । परनिन्दा महान् दुःख हो र परनिन्दा गर्नेभन्दा दोस्रो कोही पातक हुँदैन ।



परनिन्दालाई सुन्ने पनि पापी हुन् । चतुर्मासमा हजामत त्याग्नुपर्छ र नङ काट्नु हुँदैन ।

चतुर्मासमा ब्रह्मचर्य आदिको सेवन अधिक फलप्रद हुन्छ। धर्ममा संलग्न हुनु तप हो। व्रतमा सबैभन्दा उत्तम तप हो ब्रह्मचर्यको पालन । ब्रह्मचर्य तपस्याको सार र महान् फल दिने हुन्छ। ब्रह्मचर्यभन्दा ठूलो धर्मको साधन अरू छैन । चतुर्मासमा भगवान् विष्णु शयन गर्ने हुनाले यो व्रत संसारमा अधिक गुणकारी छ। देवशयनी एकादशीपछि जसले यस्तो प्रतीज्ञा गर्दछ– 'हे भगवान् ! म हजूरको प्रसन्नताका लागि अमुक सत्कर्म गर्छु।' यस प्रतीज्ञाको पालन गर्नु व्रत हो । यो व्रत अधिक गुणयुक्त हुन्छ । अग्निहोत्र, भक्ति, धर्मविषयक श्रद्धा, उत्तम बुद्धि, सत्संग, सत्य भाषण, हृदयमा दया, सरलता एवं कोमलता, मधुर वाणी, उत्तम चरित्रमा अनुराग, वेदपाठ, चोरीको त्याग, अहिंसा, लज्जा, क्षमा, मन एवं इन्द्रियहरूको संयम, लोभ, क्रोध र मोहको अभाव, इन्द्रिय संयममा प्रेम, वैदिक कर्मको उत्तम ज्ञान तथा गुरु र परमतत्त्वमा चित्तको समर्पण यी सबै नियमहरूलाई अंगीकार गरौँ र व्रतलाई यत्नपूर्वक पालन गरौँ ।

जय गुरुदेव !

*(परमपूज्य सद्‌गुरुदेव श्री शिव गोरक्षसम्बन्धी विभिन्न सत्य तथ्य कुराहरूको बारेमा जानकारी दिने क्रममा श्री सावर संरचना शक्ति केन्द्र नेपालद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा लिखित 'श्री शिव गोरक्ष-नाथंप्रदाय' ग्रन्थबाट विभिन्न प्रसंगहरू क्रमश: प्रकाशित गर्दै आइरहेका छौँ ।)*

**श्री शिव गोरक्ष-नाथंप्रदाय**

# महायोगी गुरु गोरखनाथ र नाथ सम्प्रदाय

नाथ सम्प्रदायका मूल प्रवर्तक अलख निरञ्जन, निराकार, निर्विकार, निरामय, निर्विकल्प एवं अगम्य अगोचर भगवान् शिव गोरक्षको रहस्यमय लीलाभित्र सिर्जिएको समस्त ब्रह्माण्डको रचना एवं नाथ सम्प्रदाय आफैमा रहस्यमय नै छ ।

सारा जीवन जगत्‌को कल्याणार्थ कुनै बेला गुरु, कुनै बेला शिष्य, कहिले 'ज्योति'स्वरूप, कहिले 'ॐकार'स्वरूप, कहिले अंशरूप, कहिले निराकार निर्गुण रूप त कहिले सगुण साकार रूप, यस्ता रहस्यमयी महायोगी महानाथको बारेमा छेउ टुप्पो बुझ्नै सकिँदैन ।

लीलाधारी व्यक्तिको रहस्यमय लीलाभित्र सबै योगी, स्वामी, ऋषिमुनिहरू र समस्त नाथहरू हराइरहेका छन् । उहाँको सृष्टि उहाँले नै विलीन गराउनुहुने भएकोले पनि उहाँको सृष्टिले उहाँको बारेमा बुझ्न सम्भव नै भएन । यसैले महानाथको बारेमा प्राप्त जाकारीको आधारमा गरिने व्याख्या सीमित दायराको मनुष्यको भक्तिको उपज मान्न सक्यौँ भने त्यही ठूलो कुरा हुनेछ ।

योगी नरहरिनाथ विरचित नवनाथ-नवकम्‌मा उल्लेख भएअनुसार यसरी व्याख्या गरिएको छ ।

**ज्योतिः स्वरुप ! जगदीश ! महेश्वरोऽसि ।**
**ब्रह्माण्ड-पिण्ड-गत गो-गणरक्ष ! रक्ष ॥**
**आदेश एक्ष तव शम्भुन्यते ! गुरोऽस्मान् ।**
**गोरक्षनाथ ! नवनाथ मयाऽखिलात्मन् ॥**

हे गोरक्षनाथ ! हजूर साक्षात् शिवको अवतार हुनुहुन्छ, शरीररूपी, पिण्डगत तथा समस्त विश्व ब्रह्माण्डमा गो-जातिका सर्वदा सर्वथा रक्षा गर्ने हुनाले तपाईंको नाम लोकमा गोरक्ष, गोरक्षनाथ, गोरषनाथ, गोरखनाथ आदि रहन गयो । निरञ्जन गोरक्ष सहस्रनाम, गोरक्ष लक्षनाम प्रमुख ऐतिहासिक नामस्तव प्रख्यात छन् । वस्तुत: हजूर प्रत्यक्ष महेश्वर हुनुहुन्छ ज्योतिस्वरूप हुनुहुन्छ, सारा नवनाथहरूको मूलाधार हुनुहुन्छ ।

गुरु मत्स्येन्द्रनाथले तपस्या गरी गुरु गोरक्षनाथलाई शिष्यरूपमा प्राप्त गर्नुभएको थियो । समस्त देवलोक, शिवलोक, बैकुण्ठ, ब्रह्मलोक, स्वर्ग, मर्त्य, पाताल, सप्त ब्रह्माण्ड, चौध भुवन, जल, थल, अग्नि, आकाश, सर्वत्र आफ्नो चमत्कारी कार्यले समस्तका परम आराध्यदेव हुनुहुन्छ ।

आदिनाथ भगवान् शिवले मत्स्येन्द्रनाथलाई दिनुभएको वरदान पूरा गर्न पुनः अवतार लिने निश्चय भयो। यता एकदिन कैलाशमा शिव पार्वतीमा विवाद चल्यो। पार्वतीले भगवान् शिवलाई 'तपाई जहाँ हुनुहुन्छ, म पनि शक्तिरूपमा त्यहीँ छु। मेरो बाहेक तपाइँको अलग अस्तित्व छैन। हजूर पुरुष भए म प्रकृतिरूपमा छु, हजूर ब्रह्म हुँदा म मायारूपमा छु। म मायाशक्ति सर्वत्र व्यापकरूपमा व्याप्त छु। सृष्टि मबिना अधूरो हुन्छ' भनी भनेको सुनी भगवान् आदिनाथ भन्नुहुन्छ- 'हे महेश्वरी ! जहाँ तिमी छौ, त्यहाँ म पनि अवश्य छु, यो सत्य हो तर जहाँ म विराजमान छु त्यहाँ तिमी छौ, यो भने सत्य होइन। तिमीबिना पनि मेरो अस्तित्व छ। जहाँ घट छ, त्यहाँ माटो अवश्य हुन्छ तर जहाँ माटो छ त्यहाँ घट हुँदैन। आकाश सबै पदार्थमा व्यापक छ तर सबै पदार्थ आकाशमा व्याप्त छैनन्। एक समय यस्तो अवश्य आउनेछ जब तिमीले मेरो यस्तो स्वरूपको दर्शन पाउनेछौ जुन तिमीभन्दा भिन्नै, मायाबाट धेरै पर, मायारहित, निर्लिप्त छ।' यस्तो सुनी माता पार्वतीले उक्त स्वरूपको छिटो दर्शन प्राप्त गर्ने इच्छा जाहेर गर्नुभयो र भगवान् शिवले वचन दिनुभयो।

यसरी गुरु मत्स्येन्द्रनाथको वरदान एवं माता पार्वतीको इच्छा पूरा गर्न साथै सारा संसार मायामा अल्झिरहे कसैको कल्याण नहुने, मायाजालमा अर्थात् मायाको वशमा परी सृष्टि जगत्का सम्पूर्ण प्राणीहरूले आत्मज्ञान एवं मोक्ष प्राप्त गर्न सम्भव नहुने सत्य तथ्य कुरालाई हृदयङ्गम गरी सारा जीव जगत्को कल्याण गर्नको लागि मनुष्यलाई आत्मज्ञान, महाज्ञान, महायोग प्रदान गर्दै, मायालाई जिती मोक्षको मार्ग, मुक्तिको मार्ग देखाउँदै परमपद प्राप्तिको दिशामा उन्मुख गराउने आवश्यक मार्गनिर्देशक परमगुरुको अभावलाई परिपूर्ति गर्न भगवान् शिवले आफ्नो आत्माबाट परमज्योति सर्वशक्तिमान स्वरूपलाई अलग्याउनु भयो। यसरी सम्पूर्ण शक्तिले सम्पन्न परम आदरणीय स्वरूपको नाम नै गोरक्षनाथको रूपमा प्रकट भयो। यसरी भगवान् शिवको आत्मागत परम शक्तिस्वरूपको रूपमा नै भगवान् शिव गोरक्ष रहनुभयो।

यसरी सारा संसारको कल्याण गर्न मायाभन्दा परको रूप निर्विकार, निर्लिप्त स्वरूपमा भगवान् नै गुरु गोरक्षनाथको रूपमा स्थित भई माता पार्वतीलाई पनि दर्शन दिनुभयो, गुरु मत्स्येन्द्रनाथको इच्छा पनि पूरा गरिदिनभयो।

यसरी प्रकट हुनुभएका गुरु गोरक्षनाथ एकान्त निर्जन कुनै विशेष मायारूपी पर्वतमा विराजमान भई समाधिस्थ हुनुभयो। गुरु गोरक्षनाथको तपोबलले उक्त पर्वत अत्यन्त शोभायमान, अनुपम रूपरङ्गमा सजिन थाल्यो। अति नै रमणीय, अत्यन्तै आनन्दित हुन थाल्यो। भगवान् शिवले माता पार्वतीलाई लिई भ्रमण गर्दै गुरु गोरक्षनाथले तपस्या गर्नुभएको स्थानमा पुग्नुभयो। त्यहाँ पुगेपछि महेश्वरले पार्वतीलाई भन्नुभयो, 'हे गौरी ! यस पर्वतमा महान् योगीराज चिरकालदेखि समाधिस्थ हुनुहुन्छ, तिमी गएर दर्शन गर।'

माता पार्वतीले हातमा फूल लिएर दैदीप्यमान भगवान् गोरक्षको हृदयदेखि नै आदर सम्मान प्रकट गर्नुभयो र उहाँको पूजनबाट अत्यन्त आनन्द प्राप्त गर्नुभयो। महादेवीले विभिन्न विचार गरेपश्चात् महादेवको कथन स्मरण गर्नुभयो र सोच्नुभयो कि कतै महादेवले मेरो प्रश्नको उत्तर दिन यो सबै लीला रच्नुभएको त होइन ?

यति विचार गरी महादेवीले वास्तविक सत्य परीक्षाबिना हुँदैन भनी योगीको परीक्षा लिने निर्णय गर्नुभयो। उहाँले सोच्नुभयो, 'मायालाई जित्नु कठीन कार्य हो, मेरो मायास्वरूप हो, म नै सबैभन्दा बढी शक्तिशाली मायारूपमा छु। मैले ब्रह्मा, विष्णु आदि सबैलाई वशमा नराखी छोडिन, अरूको त के कुरा।'

उमादेवी भगवान् गोरक्षनाथको परीक्षा लिनलाई चारैतर्फबाट आफ्नो योगमायाको बलबाट उत्तम पदार्थको रचना गर्दै मायाका जालोहरू फाल्दै प्रत्यक्ष उपस्थित भई देखाउन थाल्नुभयो। भगवान् गोरक्षनाथसमक्ष माता उमाका सहस्र प्रयत्नहरू विफल हुँदै गए जसरी मध्यकालमा मार्तण्डसमक्ष तारागण अस्त (विलीन) हुन्छन्।

यसप्रकार माता पार्वतीले महादेवको वचन सही र सत्य भएको सम्झनुभयो र स्वीकार गर्नुभयो कि यहाँ मेरो सत्ता अर्थात् मायाको सत्ता रहेनछ, केवल शिवको सत्ता मात्र विद्यमान रहेछ । कस्तो अद्भुत र आश्चर्यजनक रहस्य मेरो अगाडि उजागर भयो भनी विचार गरिरहनुभएकी माता पार्वतीलाई देखेर भगवान् गोरक्षनाथ उपदेश दिँदै भन्नुहुन्छ- 'हे देवी ! अब जानुहोस्, तपाईँलाई आदिनाथले स्मरण गरिरहनुभएको छ ।'

यसरी योगीराजको अनुपम उपदेशामृत पान गर्दै माता भवानी भगवान् शिवको साथ पुग्नुभयो र बारम्बार प्रणाम गर्दै भन्नुभयो, 'हे ईश्वर ! हजूरको वचन ध्रुवसत्य रहेछ । मबिना पनि हजूरको अस्तित्व रहेछ, यो मैले प्रत्यक्ष अनुभव गरेँ ।'

'हे ईश्वर ! यस्ता योगीश्वर को हुनुहुन्छ जसलाई मेरो शक्तिले कत्ति पनि विचलित गराएन र अटल समाधिमा बसिरहनुभयो ?'

महादेव भन्नुहुन्छ- 'हे महेश्वरी ! जुन योगीको तिमीले दर्शन गर्‍यौ उहाँ महायोगीश्वरको नाम गोरक्षनाथ हो । उहाँ सबै देव, मनुष्यका इष्ट हुनुहुन्छ, मायाभन्दा पर एवं कालको पनि काल हुनुहुन्छ । हे महादेवी ! म नै गोरक्षनाथ हुँ । मेरो स्वरूप नै गोरक्षनाथ हो । हामीमा कुनै फरक छैन, जसरी प्रकाशबाट प्रकाश कहिल्यै फरक हुँदैन । हे महादेवी ! संसारको कल्याण होस्, वेद, गौ, पृथ्वी आदिको रक्षा होस्- यही अभिप्रायले मैले गोरक्ष स्वरूप धारण गरेको हुँ । जब-जब योग मार्गको नाश हुन्छ तब-तब मैले गोरक्ष स्वरूपबाट रक्षा गर्दछु । त्यसैले गोरक्ष नाम मेरा सबै नामहरूमा उत्कृष्ट छ, प्रधान छ ।"

भगवान् आदिनाथ माता पार्वतीलाई गुरु गोरक्षनाथको महिमा गाउँदै भन्नुहुन्छ- "हे महेश्वरी ! जो पुरुषले योग विद्यालाई अपनाउँदछ अर्थात् सेवन गर्दछ, त्यही पुरुषले नै मृत्युलाई जित्दछ । अरू उपायबाट आयु त केही बढाउन सकिएला तर मृत्युलाई जित्न सकिँदैन । योगबल महाबल हो । योगी महाबली हो । चाहे एक रहून् चाहे अनेक भएर विचरण गरुन्, चाहे भूमिमा रहून्, चाहे आकाशमा भ्रमण गरुन्, चाहे सयौँ युगसम्म रहून्, चाहे सदा अमर रहून्, चाहे स्थूल शरीरबाट रहून, चाहे सूक्ष्म शरीरमा रहून्, चाहे स्रोतबाट सुनून्, चाहे बिना स्रोतबाट सुनून्, चाहे सागर भएर रहून्, चाहे पर्वत भएर रहून्, चाहे इन्द्र भएर राज्य गरुन् वा ब्रह्मा भई सृष्टि गरुन्, चाहे विष्णु भई पालन गरुन्, योगी सर्वथा मुक्त हुन्छन्, सक्षम हुन्छन् ।

भवानी भन्नुहुन्छ- 'हे भगवान्, हजूरलाई कोटिकोटि नमन गर्दछु । हजूरको माया अनन्त छ, हजूरको शक्ति अद्वितीय छ । जगत् हजूरको बगैँचा हो र हजूर त्यसको माली हुनुहुन्छ । त्यो बगैँचाले प्रत्येक दिन फूलहरूसँग फुलेर नयाँ रूप धारण गरिरहेको हुन्छ ।'

यसरी शिव-पार्वती कैलाशतर्फ लाग्नुभयो ।

ब्रह्माजीले योगी नारदलाई महादेव-पार्वतीको यो वृत्तान्त सुनउँदै हुनुहुन्थ्यो । यस प्रसङ्गपछि नारदजीले ब्रह्माजीसँग पुन: प्रश्न गर्नुहुन्छ- 'पहिला हजूरले महादेवले सिद्धनाथ मत्स्येन्द्रनाथजीलाई वर दिई नाथ वंश एवं योग मार्गको प्रवर्तक भए भन्नुभएको थियो । कसरी उहाँले योग प्रचार गर्नुभयो, पछि कुन महामहिमाशाली शिष्यलाई आफ्नो योग उपदेश गर्नुभयो र कसरी नाथ नामको सम्प्रदाय विकसित भयो ?'

ब्रह्माजी भन्नुहुन्छ- 'हे नारद ! त्यसपछि महेश्वर मूलनाथावतार भगवान् गोरक्षनाथ समुद्रको किनारामा पुग्नुभयो जहाँ मत्स्येन्द्रनाथ तपस्या गरिरहनुभएको थियो । त्यहाँ पुगी गोरक्षनाथजीले मत्स्येन्द्रनाथको समाधिमा मनोयोग प्रबोधित गरी योग पद्धतिको बारेमा सोध्नुभयो र विनीत भावले प्रार्थना गर्नुभयो । साथै, नाथपद, योगवंश प्रवर्तकर्ता हुनुभयो । यसरी मत्स्येन्द्रनाथले गुरु गोरक्षनाथलाई योगको शक्तिपात, करुणावलोकन, औपदेशिक गरी तीन शिक्षा प्रदान गर्नुभयो । यसैको माध्यमद्वारा गुरु गोक्षनाथले धेरै राजा, महाराजा, ऋषिमुनिहरूलाई कृतार्थ गरी दिव्य ज्ञान दिई अमरपद प्रदान गर्नुभयो ।

यो सारा वृत्तान्त श्रीस्कन्दपुराणमा ब्रह्माजी र नारदबीचको संवादमा पाइन्छ । क्रमश:

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौँ । आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ ।*

# आफ्नो हात आफै हेरौं

## हृदय रेखा ( अघिल्लो अंकबाट क्रमशः)

१२. हृदय रेखा हत्केला नजिकै पुगेको छ भने व्यक्ति जोसुकैप्रति पनि अन्धश्रद्धा राख्ने हुन्छ ।

१३. यदि हृदय रेखा कैयौं स्थानमा काटिएको छ भने व्यक्तिको जीवनमा निराशाको भावना बारम्बार बनिरहन्छ ।

१४. यदि हत्केलामा अर्को हृदय रेखा देखिन्छ भने व्यक्तिले उच्च तहसम्म प्रेम गर्छ । तर उसलाई जीवनमा निराशा नै हात लाग्छ ।

१५. यदि हृदय रेखाको अन्तमा तारा चिह्न देखिन्छ भने त्यस व्यक्तिको मृत्यु आकस्मिक हुन्छ ।

१६. यदि हृदय रेखा वृहस्पति पर्वतलाई घेरेर गएको छ भने त्यस व्यक्तिमा घृणाको भावना आवश्यकताभन्दा बढी हुन्छ ।

हृदय रेखा

१७. यदि हृदय रेखामा नक्षत्रको चिह्न देखिन्छ भने त्यो व्यक्ति आजीवन रोगी हुन्छ ।

१८. यदि हृदय रेखाको अन्तिम सिरा दुई भागमा विभक्त भएको छ भने व्यक्ति एउटा सफल न्यायाधीश, सहृदयी, सामाजिक तथा सद्गुणबाट सम्पन्न हुन्छ ।

१९. यदि यो रेखा शनि पर्वतमा समाप्त हुन्छ भने त्यस व्यक्ति आवश्यकताभन्दा बढी कामुक हुन्छ ।

२०. यदि यो रेखा सूर्य पर्वतमा गएर समाप्त हुन्छ भने यस्तो व्यक्तिले बारम्बार धोका खान्छ ।

२१. यदि हृदय रेखाले गुरु पर्वतमुनि गएर त्रिशूलको रूप लिन्छ भने उसको यौवनकाल पागलखानामा व्यतीत हुन्छ ।

२२. यदि शनि पर्वतमुनि हृदय रेखा तथा मस्तिष्क रेखामा क्रस चिह्न छ भने त्यस व्यक्तिको अति सानो उमेरमा मृत्यु हुन्छ ।

२३. हृदय रेखा मस्तिष्क रेखा जत्तिकै लामो, स्पष्ट र लालिमायुक्त छ भने त्यति नै बढी श्रेष्ठ मानिन्छ । यस्तो व्यक्तिले विश्वसनीय सम्मान प्राप्त गर्छ ।

२४. दोहोरो हृदय रेखा अत्यन्त उच्च पद प्राप्तिमा सहायक हुन्छ ।

२५. यदि मङ्गल पर्वत उठेको छ र हृदय रेखा स्पष्ट छ भने व्यक्तिले जीवनमा जोखिमपूर्ण कार्य गर्दछ ।

२६. यदि औँलाहरू वर्गाकार छन् र हृदय रेखा अगाडि गएर मस्तिष्क रेखातिर झुक्दछ भने यस्तो व्यक्ति निम्न स्तरको हुन्छ ।

२७. अत्यन्तै सानो हृदय रेखाले व्यक्तिको दुर्भाग्यलाई संकेत गर्दछ ।

२८. यदि हृदय रेखा आवश्यकताभन्दा रातो छ भने त्यस व्यक्ति जरुरतभन्दा बढी हिंस्रक हुन्छ ।

२९. यो रेखा यदि पहेँलो देखिन्छ भने व्यक्तिलाई हृदय रोगले बारम्बार सताइरहन्छ ।

३०. यदि हृदय रेखा आवश्यकताभन्दा चौडा छ भने स्वास्थ्यको मामिलामा व्यक्ति जीवनभरि बारम्बार कमजोर बनिरहन्छ ।

३१. यदि यो रेखा अति नै पातलो अनि लामो छ भने व्यक्ति नि:सन्देह हत्यारा हुन्छ ।

३२. यदि हृदय रेखा हत्केलाको अन्तिम सिरासम्म पुगेको छ र आफैमा अत्यन्तै कमजोर छ भने त्यस व्यक्तिको सन्तान हुँदैन ।

३३. यदि हृदय रेखा जंजीरसमान छ भने यस्तो व्यक्तिलाई विश्वास गर्न सकिन्न । यस्तो व्यक्ति झूटो बोल्नमा चतुर हुन्छ ।

३४. यदि यो रेखा जंजीरदार छ र शनि पर्वतमुनि गएर समाप्त हुन्छ भने उसलाई विपरित लिंगीप्रति घृणा हुन्छ ।

३५. यदि कुनै स्त्रीको हातमा हृदय रेखा शनि पर्वतमा गएर जंजीरसमान बनेको छ छ भने त्यस स्त्री कुलटा हुन्छे ।

३६. यदि यो रेखा सूर्य पर्वतमुनि छिन्नभिन्न हुन जान्छ भने त्यस व्यक्ति कमजोर हुन्छ ।

३७. बुध पर्वतमुनि यो रेखा टुटे फुटेको छ भने उसको वैवाहिक जीवन दु:खमय हुन्छ ।

३८. यदि हृदय रेखाबाट कुनै शाखा निस्केर मङ्गल पर्वततिर जान्छ भने यस्तो व्यक्ति कठोर हृदय तथा निर्दयी स्वभावको हुन्छ ।

३९. हृदय रेखामा कालो विन्दु व्यक्तिको विवाहमा बाधाकारक मानिन्छ ।

४०. यदि हृदय रेखामा सेतो विन्दु छ भने उसको वैवाहिक जीवन आदर्श कहलिन्छ ।

४१. यदि हृदय रेखामा त्रिकोण चिह्न छ भने उसलाई विश्वव्यापी कीर्ति मिल्छ ।

४२. यदि हृदय रेखा गुरु पर्वतमा गएर मङ्गल पर्वततिर मोडिन्छ भने त्यो व्यक्ति मूर्ख हुन्छ ।

४३. यदि यो रेखा चतुर्भुजका साथ जहाँसुकै समाप्त भए पनि त्यस्तो व्यक्ति अस्थिर स्वभावको हुन्छ ।

४४. यदि यो रेखा शनि पर्वतमुनि मस्तिष्क रेखासँग मिल्दछ भने त्यस व्यक्तिको जीवनमा कैयौँ दुर्घटनाहरू हुन्छन् ।

४५. यदि हृदय रेखा बुध पर्वतमुनि मस्तिष्क रेखासँग मिल्छ भने त्यस व्यक्तिको यौवनकालमा नै मृत्यु हुन्छ ।

४६. यदि यो रेखा तल झुकेर चन्द्र पर्वततिर गएको देखिन्छ भने वा चन्द्र पर्वतबाट कुनै रेखा निस्केर यो सँग मिलेको छ भने उसलाई जीवनमा अप्रत्याशित सफलता प्राप्त हुन्छ ।

४७. यदि केही तेर्सो रेखाले हृदय रेखालाई कैयौँ स्थानबाट काटेको देखिन्छ भने उसलाई जीवनमा कैयौँ प्रकारका रोग हुन्छन् ।

४८. यदि हृदय रेखाबाट कुनै सहायक रेखा निस्केर मस्तिष्क रेखासँग जोडिन्छ भने उसमा प्रेम गर्ने क्षमता आवश्यकताभन्दा बढी हुन्छ ।

४९. यदि हृदय रेखाबाट कुनै सहायक रेखा निस्केर शनि पर्वततिर जान्छ भने उसलाई प्रेमको क्षेत्रमा निराशा मिल्छ ।

५०. यदि भाग्य रेखाबाट कुनै सहायक रेखा निस्केर हृदय रेखालाई स्पर्श गर्दछ भने उसको गृहस्थजीवन तनावग्रस्त हुन्छ ।

५१. यदि शुक्र पर्वतबाट कुनै सहायक रेखा निस्केर हृदय रेखासँग मिल्छ भने त्यस व्यक्ति आवश्यकताभन्दा बढी भोगी हुन्छ ।

५२. यदि यस रेखामा बुध पर्वतमुनि क्रस छ भने उसलाई व्यापारमा बारम्बार असफलताको मुख देख्न पर्ने हुन्छ ।

५३. यदि यस रेखाबाट कुनै चतुर्भुज बन्छ भने यस्तो व्यक्तिमा अत्यधिक प्रतिभा हुन्छ । तर आफ्नो लागि भने यस्तो व्यक्ति असफल रहन्छ ।

५४. यदि हृदय रेखा गुरु पर्वतमुनि कैयौँ शाखामा बाँडिन्छन् भने त्यस व्यक्ति भाग्यशाली हुन्छ ।

५५. यदि यस रेखाको प्रारम्भमा नै शाखा पुञ्ज छ भने यस्तो व्यक्ति आवश्यकताभन्दा बढी बोल्ने हुन्छ ।

५६. यदि यस रेखाको मध्यमा शाखा पुञ्ज छ भने व्यक्ति कट्टर एवं घमण्डी हुन्छ ।

५७. यदि कुनै व्यक्तिको हत्केलामा हृदय रेखा छैन भने त्यो व्यक्ति निर्दयी हुन्छ ।

५८. यदि हृदय रेखाबाट कुनै पनि प्रकारको सहायक रेखा निस्केको छैन भने यस्तो व्यक्तिलाई सन्तान सुख प्राप्त हुँदैन ।

५९. बिना कुनै शाखा यो रेखा गुरु पर्वतमुनि समाप्त हुन्छ भने यस्तो व्यक्ति जीवनमा गरीबीमै रहन्छ ।

६०. यदि रेखाको अन्तिम सिरामा कुनै बेग्लै प्रकारको निशाना छ भने त्यो व्यक्ति लकवाको शिकार हुन्छ ।

६१. यदि सूर्य पर्वतमुनि कुनै विन्दु छ भने त्यस्तो व्यक्ति भावुक हुन्छ ।

६२. बुध पर्वतमुनि यदि कुनै विन्दु देखिन्छ भने त्यस व्यक्ति प्रसिद्ध चिकित्सक हुन्छ ।

६३. यदि यो रेखामा वृत्तको चिह्न देखिन्छ भने हृदय रेखाको दृष्टिबाट कमजोर हुन्छ

६४. यदि हृदय रेखामा कुनै द्वीप देखिन्छ भने उसको जीवनमा कैयौं विश्वासघात हुन्छ ।

६५. यदि भाग्य रेखा तथा हृदय रेखा दुवैमा द्वीपको चिह्न देखिन्छ भने त्यो व्यक्ति व्यभिचारी हुन्छ ।

६६. हृदय रेखामा कुनै चोटको चिह्न देखिन्छ भने उसले जीवनमा प्रेममा असफलताको सामना गर्नुपर्ने हुन्छ ।

६७ हृदय रेखा जति बढी स्पष्ट, सुन्दर र लालिमायुक्त हुन्छ त्यति नै बढी सफलता एवं श्रेष्ठता प्राप्त हुन्छ ।

वस्तुत: हृदय रेखाको मानव जीवनमा अति नै महत्त्व छ । हस्तरेखा विशेषज्ञले यस रेखाको सावधानीका साथ अध्ययन गर्नुपर्दछ ।

जय गुरुदेव !

## २०६७ श्रावण महिनामा पर्ने चाडपर्वहरु

| **श्रावण महिनाभर श्री शिव गोरक्ष महोत्सव** | |
|---|---|
| श्रावण ३ गते | **श्री शिव गोरक्ष हवन**<br>अष्टमीव्रत, गोरखकाली पूजा |
| श्रावण ४ गते | **तान्त्रोक्त वटुक भैरव हवन,**<br>**तान्त्रोक्त गणपति हवन** |
| श्रावण ५ गते | **दिव्य गुरु महोत्सव,**<br>**तान्त्रोक्त महालक्ष्मी हवन**<br>**तान्त्रोक्त विन्ध्यवासिनी हवन**<br>हरिशयनी एकादशी, तुलसी रोप्ने दिन |
| श्रावण ६ गते | **तान्त्रोक्त बगलामुखी हवन,**<br>**तान्त्रोक्त महर्षि वेदव्यास हवन** |
| श्रावण ७ गते | प्रदोष व्रत |
| श्रावण ९ गते | **गुरु पूर्णिमा महोत्सव,** व्यास पूजा |
| श्रावण १० गते | दक्षिणामूर्ति पूजा |
| श्रावण १८ गते | गोरखकाली पूजा |
| श्रावण २१ गते | कामिका एकादशी |
| श्रावण २२ गते | शनिप्रदोष व्रत |
| श्रावण २३ गते | घण्टाकर्ण चतुर्दशी |
| श्रावण २७ गते | बराह जयन्ती |
| श्रावण २९ गते | नाग पञ्चमी |
| श्रावण ३० गते | कल्की जयन्ती |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरु पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

# यौगिक षट्कर्माभ्यास
# नेति

यौगिक षट्कर्माभ्यासअन्तर्गत पर्ने नेतिले शारीरिक, मानसिक र आध्यात्मिक दृष्टिले धेरै फाइदा दिने कुरा हठयोगका ग्रन्थहरूमा उल्लेख गरिएको पाइन्छ । आजकाल प्राकृतिक चिकित्साको रूपमा नेतिको प्रयोग विभिन्न अस्पतालहरूमा गरिएको पाइन्छ। नेतिलाई जोसुकैले आफ्नै घरमै पनि गर्न सक्छन् ।

नेति दुई प्रकारका छन्– जलनेति र सूत्रनेति । पहिले जलनेति गर्नु लाभदायक हुन्छ ।

**जलनेति :**

जलनेतिमा प्रयोग हुने भाँडा बजारमा पाइन्छ । सर्वप्रथम उक्त लोटामा जुन मिसिएको हल्का तातो पानी राख्नुपर्दछ । जुन नासिन्द्राबाट श्वासप्रश्वास भइरहेको छ, उक्त नासिन्द्रालाई माथितिर फर्काएर लोटाको टुटीलाई लगाउने । मुखलाई खुला छोड्नुपर्दछ जसले गर्दा श्वासप्रश्वास मुखबाट हुन सकोस् । अब लोटालाई

जलनेति गर्दै

माथि उठाउने जसले पानी नाकमा जान सकोस् । यस अवस्थामा पानी नाकको एउटा प्वालबाट भित्र गएर अर्को प्वालबाट बाहिर निस्कन्छ । यसैप्रकार अर्को नासिन्द्राबाट पानी भित्र पसाएर पहिलेको नासिन्द्राबाट बाहिर निकालिन्छ ।

माथि बताइएको क्रियामा ध्यान दिनुपर्ने कुरा के छ भने नाकबाट श्वास कत्ति पनि लिनु हुँदैन, मुखबाट मात्रै श्वासप्रश्वास क्रिया गर्नुपर्दछ । एकपटकमा एक लिटरसम्म पानीलाई प्रयोग गर्न सकिन्छ । तीव्र नेत्ररोग, अम्लपित्त र ज्वरोको अवस्थामा जलनेति वर्जित छ ।

जलनेतिको अभ्यास प्रतिदिन गर्न सकिन्छ। जलनेतिपछि भस्त्रिका प्राणायाम गर्नुपर्दछ । अलि अगाडि झुकेर, घाँटीलाई दायाँ-बायाँ, माथि-तल घुमाएर भस्त्रिका गर्नुपर्दछ जसले गर्दा नाक पूर्णरूपले सफा हुन जान्छ र नाकभित्र पानी जम्न पाउँदैन ।

जलनेतिका लागि प्रयोग गरिने भाँडा

**जलनेतिबाट पाइने फाइदा :**

– मस्तिष्कसम्बन्धी रोगहरूमा फाइदा पुऱ्याउँछ ।
– बुद्धिको तीव्रतामा वृद्धि गराउँछ ।
– अनिद्रा नाश गर्दछ ।
– नेत्र ज्योति बढ्छ ।
– नाक, कान, घाँटीका रोगहरूमा फाइदा गर्दछ ।

**सूत्रनेति :**

जलनेतिपछि सूत्रनेतिको अभ्यास गर्नुपर्दछ । सूत्रनेति हप्तामा एक वा दुईपटक मात्र गर्नुपर्दछ । सूत्रनेतिमा सुत वा पातलो चार/पाँच नम्बरको रबरको क्याथेटर प्रयोग गर्न सकिन्छ। यो बजारमा सजिलै उपलब्ध हुन्छ । सर्वप्रथम बिहान उठेर हातमुख धोएर नेतिको लागि तयार हुने । सर्वप्रथम जलनेति गर्नुपर्दछ । त्यसपछि सूत्रनेति गर्नुपर्दछ। यसको लागि सीधा उभिनुपर्दछ, घाँटीलाई सीधा राखी जुन नाकको प्वालबाट श्वासप्रश्वास भइरहेको छ, उक्त नाकबाट बिस्तारै सूत्रको मोमयुक्त भागलाई भित्र पठाउनुपर्दछ। जब उक्त सूत्र गलामा आउँछ त्यसलाई अर्को हातले समाउनुपर्दछ। अब सूत्रका दुईटै छेउलाई हातले समातेर बिस्तारै बाहिर-भित्र गरेर घर्षण गर्ने । अब सूत्रलाई बिस्तारै बाहिर निकाल्ने र अर्को नाकबाट पनि गर्ने । सूत्रलाई राम्रोसँग धोएर राख्नुपर्दछ । सूत्रको मोमवाला भागलाई तातो पानीले धुनु हुँदैन । आजकाल सूत्रभन्दा क्याथेटरको प्रयोग बढी मात्रामा गरिन्छ । प्राय:

सूत्रनेति गर्दै

चार वा पाँच नम्बरको क्याथेटर प्रयोग गर्नुपर्दछ ।

**सूत्रनेतिका फाइदाहरू :**

कपालशोधनी चैव दिव्यदृष्टि प्रदायिनी ।

जत्रर्ध्वजातोरोगौध नितिराशु निहंति च ॥

(हठयोगप्रदीपिका-३०)

अर्थात्,

–मस्तिष्क शुद्ध राख्छ ।

–दिव्यदृष्टि प्रदान गर्दछ ।

–आँखा र वक्षस्थलका सन्धीहरूलाई रोगमुक्त राख्दछ ।

–कफादि दोषहरूलाई बाहिर निकालेर शिरलाई स्वच्छ राख्दछ ।

–नेत्रको ज्योति बढाउँछ ।

–नाक, कान, घाँटीका रोगहरूबाट बचाउँछ ।

–रुघाखोकी, टाउको दुख्ने, बहिरोपना, नाकको हड्डी बढ्नबाट बचाउँछ ।

जय गुरुदेव !

# ब्रह्म साक्षात्कार

– किरण पन्थी (पाण्डेय)

यी मेरा समर्थ पाउले मलाई
प्रभुको मन्दिरमा पु¥याउँछन्
यसैले यी धन्य छन्, यसैले यी धन्य छन् ।
यी मेरा समर्थ हातले मलाई
प्रभु वन्दनमा सघाउँछन्
यसैले यी धन्य छन्... ।
यी मेरा समर्थ दुई नयनले मलाई
प्रभुको सौन्दर्य रसपान गराउँछन्
यसैले यी धन्य छन्... ।
यी मेरा समर्थ कानले मलाई
सरर संगीत प्रभुको सुनाउँछन्
यसैले यी धन्य छन्... ।
यी मेरा अंगहरुलाई माया गर्ने
मेरो चंचल मनले मलाई
प्रभु कीर्तनमा रमाई
छम्छम् नाच्न लगाउँछ
यसैले यो मन धन्य छ... ।
यही मन गीत गाउँछ हरदम
यसैले यो मन धन्य छ... ।
मनभित्र मन जब पुग्दछ
मनले मनलाई चिन्दछ
यसैले यो मन धन्य छ... ।
मनले मनलाई जब चिन्दछ
मनभित्र मन तब बिलाउँछ
मनभित्र मन जब बिलाउँछ
झलल झल्किई ब्रह्म तब उदाउँछ
त्यसैले त्यो ब्रह्म धन्य छ, त्यसैले त्यो ब्रह्म धन्य छ ।

ब्रिलियन्ट बहुमुखी क्याम्पस
चाबहिल, काठमाडौं ।

# समर्पण

**धनं धान्यं जरा देहं समर्पित्वं गुरौर्पदम्।**
**सदा स्मरेत् गुरोः कार्य सदा सेव्यं गुरोर्हितम्।**

शिष्य त्यो हो जसले धन्य, धान्य, भूमि र आफ्नो देहलाई पनि तत्क्षण समर्पित गर्दछ, कुनै पनि प्रकारको आज्ञाको प्रतीक्षा गर्दैन, सबै कुरा समर्पित गरेर नै प्रसन्नता अनुभव गर्दछ, गुरुको चरणमा आफूलाई समर्पित गरेर हर्षित हुन्छ, ऊ नै सही अर्थमा शिष्य हुन्छ ।

जसले नित्य गुरु चरणको स्मरण गर्दछ, जसले प्रतिक्षण गुरुको सेवा गर्दछ, गुरुको कार्यलाई नै आफ्नो कार्य ठान्दछ, गुरुको हितलाई नै आफ्नो हित मान्दछ, श्रेष्ठभन्दा श्रेष्ठ वस्तु पनि गुरु चरणमा राख्छ र फिर्ता पाउने आशा गर्दैन, ऊ नै सही अर्थमा शिष्य हो ।

शिष्यको तुलना कसैसँग पनि हुन सक्दैन । देवता पनि शिष्य सामु तुच्छ मानिन्छन्, समस्त तीर्थ पनि शिष्यसामु गौण हुन्छन् किनकि सही अर्थमा ऊ गुरुको नै एउटा अंश बन्न जान्छ... । गुरुको अंश बनेपछि केही पनि बाँकी रहन्न । जसरी नदी समुद्रमा मिलेपछि समुद्र बन्छ, जसरी पोखरीको गह्नाउने फोहर पानी गंगामा मिलेर पवित्र र दिव्य निर्मल गंगाजल बन्छ त्यसरी नै शिष्य गुरुमा समाहित भएर पूर्ण ब्रह्माण्डमय बन्न जान्छ । समस्त ब्रह्माण्ड यस्ता शिष्यको सराहना गरेर थाक्दैन र आकाशबाट समस्त देवीदेवताहरुले ऊमाथि फूल बर्षाउँछन् ।

वास्तवमा सबै कुरा बिर्सेर गुरुमा लीन हुनु, गुरुसँग एकाकार हुनु शिष्यका एकमात्र धर्म हो, एकमात्र चिन्तन हो र शिष्यले यसका लागि सदैव प्रयासरत रहनुपर्दछ ।

समस्त भौतिक जीवनको सफलतालाई हेय मानेर निरन्तर गुरु सेवाको चिन्तन नै शुद्ध र शास्त्रसम्मत सर्मपण हो ।

# २०६७ श्रावण महिनाका शुभ समयहरू

**श्रावण २, ९, १६, २३ र ३० गते (आइतवार)**
सर्वश्रेष्ठ– दिन ६:००–६:४८
रात्रि ६:४८–७:३६, ३:३६–४:२४
श्रेष्ठ– दिन ६:४८–१०:००
रात्रि ८:२४–१०:००, ४:२४–६:००

**श्रावण ३, १०, १७, २४ र ३१ गते (सोमवार)**
सर्वश्रेष्ठ– रात्रि ७:३६–९:१२
श्रेष्ठ– दिन ६:००–७:२४, १०:४८–१:१२, ३:३६–५:१२
रात्रि ९:१२–१०:००, १:१२–२:४८

**श्रावण ४, ११, १८ र २५ गते (मंगलवार)**
सर्वश्रेष्ठ– रात्रि ७:३६–९:१२, ३:३६–४:२४
श्रेष्ठ– दिन ६:००–८:२४, १०:००–१२:२४, ४:३६–५:१२
रात्रि ९:१२–१०:००, १२:२४–२:००, ४:२४–६:००

**श्रावण ५, १२, १९ र २६ गते (बुधवार)**
सर्वश्रेष्ठ– दिन ३:३६–४:२४
रात्रि ९:१२–१०:४८
श्रेष्ठ– दिन ७:३६–९:१२, ४:२४–६:००, ११:३६–१२:००
रात्रि ६:४८–९:१२, २:००–६:००

**श्रावण ६, १३, २० र २७ गते (बिहीवार)**
सर्वश्रेष्ठ– रात्रि ७:३६–९:१२
श्रेष्ठ– दिन ६:००–८:२४, १०:४८–१:१२, ४:२४–६:००
रात्रि ९:१२–१०:००, १:१२–२:४८, ४:२६–६:००

**श्रावण ७, १४, २१ र २८ गते (शुक्रवार)**
सर्वश्रेष्ठ– रात्रि १:१२–३:३६
श्रेष्ठ– दिन ६:४८–१०:२४, १२:१२–१:१२, ४:२४–५:१२,
रात्रि ८:२४–१०:४८, ४:२४–६:००

**श्रावण १, ८, १५, २२ र २९ गते (शनिवार)**
श्रेष्ठ– दिन १०:३६–१२:२४, ३:३६–५:१२,
रात्रि ८:२४–१०:४८, २:००–३:३६, ४:२४–६:००

**नोट**:
दिन–भन्नाले बिहान ६:०० देखि साँझ ६:०० सम्म
रात्रि–भन्नाले साँझ ६:०० देखि अर्को बिहान ६:०० सम्म

*परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूद्वारा रचित 'ज्योतिष और काल निर्णय' ग्रन्थमा आधारित ।*

फलफूलमा सर्वश्रेष्ठ

# आँप

आँप फलफूलहरुमा सर्वश्रेष्ठ छ । त्यसैले पनि होला आँपसँग परिचित नभएको व्यक्ति विरलै होलान् । प्रायः गर्मी महिनामा पाइने आँपको सामान्य परिचय, खाद्य एवं चिकित्सकीय उपयोगको बारेमा केही जानकारी दिने प्रयास गरेका छौं ।

यसको वैज्ञानिक नाम _Mangifera Indica Linn_ हो । यो Anacardiaceae कुलअन्तर्गत पर्ने जाति हो । संस्कृतमा यसलाई आम्र, चूत, रसाल, सहकार, पिकवल्लम, मधुदूत आदि भनिएको पाइन्छ भने हिन्दीमा आम, बंगालीमा आम्र, पंजाबीमा अंब, गुजरातीमा अमरी र अंग्रेजीमा Mango भनिन्छ ।

**स्वरूप**:

यसको रुख ३०-४० फुटदेखि १००-१२० फुटसम्म अग्लो हुन्छ । यसको पात ४-१२ इंच लामो, १-पहेंलो, लामा मंजरीमा हुन्छ जुन सुगन्धित हुन्छ । फल विभिन्न आकारका, काँचोमा हरियो र पाकेपछि पहेंलो वा रातो हुन्छ । फलमज्जा पहेंलो वा सुन्तला रंगको, मधुर वा मधुराम्ल सुगन्धित हुन्छ । फलभित्र ठूलो गुठली (बीज) हुन्छ र त्यसभित्र वीजमज्जा हुन्छ । वसन्त ऋतुमा पुष्प तथा ग्रीष्म, वर्षा ऋतुमा फल लाग्दछन् ।

**जाति** :

यसका अनेक जाति हुन्छन् । मुख्यतया व्यवहारमा कलमी र बीजू दुई भेद छन् ।

**रासायनिक संघटन** :

काँचो फलमा २१% जल, ६१.५% जलीय सत्व, ५% सेल्युलोज, १.५% अविलेय सत्व र १.५% घुलनशील भस्म (जसमा पोटाज, टार्वरिक,

साइट्रिक र मैलिक एसिड) हुन्छ। पाकेको फलमा पीत रञ्जक द्रव्य, पर्णहरित द्रव्य, कार्बनबाइसल्फाइड, बेञ्जोल, गोलिक एसिड, साइट्रिक एसिड तथा गोंप हुन्छ। यसको बोक्रामा टनिन (१६-२०% ) हुन्छ र यसबाट Mangiferin पनि निकालिएको छ। बीजमज्जामा गैलिक र टैनिक एसिड, वसा सर्करा, गोंप, भस्म र धेरै मात्रामा स्टार्च (७२ं८%) हुन्छ। बीजमज्जाबाट सत्वपान विधिद्वारा एक ठोस वसा (Mango butter) प्राप्त हुन्छ। फलमा भिटामिन ए र सी धेरै मात्रामा पाइन्छ। यसको फूलबाट सुगन्धित तेल (सहकारतेल) प्राप्त हुन्छ।

**गुण** :

यो गुणमा ललुरुक्ष, रसमा कषाय, विपाकमा कटु र वीर्यमा शीत हुन्छ।

**चिकित्सकीय प्रयोग** :

- यसको बोक्रा पात, पुष्प र बीजमज्जा कफपैत्तिक विकारहरु र पाकेको फल वातपैत्तिक विकारहरु नाशक हुन्छ।

- रक्तस्राव, घाउमा बोक्रा, फूल, पात र  बीजमज्जाको चूर्ण लगाइन्छ। लू लाग्दा र दाहमा काँचो फललाई आगोमा पकाएर त्वचामा लगाउँदा धेरै फाइदा गर्छ।

- अरुची अग्निमांद्यमा काँचो फलको चटनी प्रयोग हुन्छ। पाकेको फलले कब्जियत, पेटभित्रको रुखापनलाई नाश गर्दछ। पत्रको स्वरस उल्टी रोक्नलाई दिइन्छ। पुष्प, त्वक तथा बीजमज्जाको प्रयोग अतिसार, प्रवाहिका र बीजमज्जाको चूर्णले कृमि नाश गर्दछ।

-हृदयरोग, रक्ताल्पता, रक्तपित्तमा पाकेको फल र रक्तपित्तमा बोक्रा, पुष्प र बीजमज्जाको प्रयोग गरिन्छ।

- शुक्र दौर्बल्यमा पाकेको फल र रक्तप्रदर, श्वेतप्रदरमा बीजमज्जाको प्रयोग गरिन्छ भने दौर्बल्य, वर्णविकार र कृशतामा पाकेको फलको प्रयोग गरिन्छ।

**प्रयोज्य अंग** :

बोक्रा, पात, फूल, फल र बीजमज्जा।

**प्रयोज्य मात्रा** :

स्वरस- १०-२० मि.लि., क्वाथ ५०-१०० मि.लि., चूर्ण ३-६ ग्रा.।

बजारमा विभिन्न औषधीय योगहरु जस्तैः पुष्पानुग चूर्ण, आम्रपानक आदि उपलब्ध छन्।

काँचो आँप बढी मात्रामा खाँदा मन्दाग्नि, विषमज्वर, रक्तविकार, कब्जियत र नेत्ररोग हुन सक्दछ। आँपको प्रयोग गर्दा यदि कुनै किसिमको समस्या देखियो भने सौंपको चूर्ण पानीसँग वा जीराको चूर्णलाई कालो नुनसँग दिँदा उपद्रवहरु शान्त हुन्छन्।

जय गुरुदेव !

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रका मासिक हवन कार्यक्रमअन्तर्गत हरेक महिना सञ्चालन हुँदै आइरहेका हवन कार्यक्रमहरु गत महिना निम्नानुसार सम्पन्न भए ।

### केन्द्रीयरूपमा सम्पन्न

आषाढ ७ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, समय बिहान ८:००–९:०० । आषाढ १ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, समय बिहान ७:००–८:०० । आषाढ २ गते वुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, समय बिहान ८:००–९:०० । आषाढ ३ गते बिहीबार– तान्त्रोक्त वगलामुखी हवन, वगलामुखी मन्दिर, पाटन, समय बिहान ८:००–९:०० ।

### सम्पर्क कार्यालयहरूमा सम्पन्न

आषाढ २ गते वुधबार– तान्त्रोक्त विन्ध्यवासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, समय बिहान ८:००–९:०० । आषाढ ३ गते बिहीबार– तान्त्रोक्त वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, समय बिहान ८:००–९:०० । आषाढ १ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, समय बिहान ७:००–८:०० । आषाढ १ गते मंगलबार– तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, समय बिहान ७:००–८:०० ।

## महाप्रयाण दिवस सम्पन्न

गुरूको अवतरण मात्रै होइन, उहाँको महाप्रयाण दिवस पनि शिष्यका लागि महत्त्वपूर्ण र गरिमा–महिमाले युक्त हुन्छ । गुरूको महाप्रयाण दिवस शिष्यका लागि एउटा संकल्प हो– गुरूको चिन्तनलाई अझै फैलाउने, यो एउटा लक्ष्य हो– गुरूले छोडेर जानु भएको बाँकी कार्यलाई सम्पन्न गर्ने । यही लक्ष्य र संकल्पलाई आत्मसात् गर्दै परमपूज्य सद्‌गुरूदेव डा. नारायणदत्त श्रीमालीज्यूको १२ औं महाप्रयाण दिवसलाई गुरू मन्त्र जपका साथै अन्य विविध कार्यक्रमका बीच मनाइएको छ ।

विश्वविख्यात् ज्योतिषी, मन्त्र–तन्त्रका प्रकाण्ड विद्वान् ध्यान, योग, वेद, पुराण, उपनिषद्, आयुर्वेद, रसायनशास्त्र, सामुद्रिकशास्त्र, सम्मोहनशास्त्र तथा सूर्यविज्ञान, स्वर्णविज्ञान एवं मनोविज्ञानजस्ता विषयका अनन्य ज्ञाताका रूपमा प्रतिष्ठित परमपूज्य सद्‌गुरूदेव डा. नारायणदत्त श्रीमालीज्यूले महाप्रयाण लिनुभएको पुण्य दिन जुलाई ३ तारीखलाई प्रत्येक वर्ष महाप्रयाण दिवसको रूपमा मनाउने परम्पराअनुसार सिद्धाश्रम शक्ति केन्द्रले गत असार १९ गते यस कार्यक्रमलाई सम्पन्न गऱ्यो ।

जसअन्तर्गत बिहान ९:०० बजेदिख अपराह्न ४:०० बजेसम्म गुरूमन्त्रजपको क्रम रहेको थियो भने वृद्धाश्रमहरूमा वृद्धवृद्धाहरूलाई खाना खुवाउने तथा एकजना वृद्धलाई एकसेट कपडा दान गर्ने कार्यक्रम थियो । काठमाडौंमा पशुपतिमा रहेको वृद्धाश्रममा फलफूल वितरण गरिएको थियो भने नयाँ वानेश्वर शान्तिनगरमा रहेको नि:सहाय सेवा सदनमा रहनुभएका वृद्धवृद्धाहरूलाई बिहान, दिउँसो र बेलुकीको खानाको व्यवस्था गरिएको थियो । उक्त सेवा सदनमा साँझ भजनकीर्तन कार्यक्रम पनि सम्पन्न भएको थियो । कार्यक्रम बसुन्धरा तथा देशभर रहेका विभिन्न सम्पर्क कार्यालयहरूद्वारा स्थानीय स्तरमा सम्पन्न गरिएको थियो । मंत्रजप कार्यक्रममा हजारौं जनाको सहभागिता थियो ।

परमपूज्य सद्‌गुरूदेव डा. नारायणदत्त श्रीमालीज्यूको अवतरण सन् १९३३, अप्रिल २१ तारीखका दिन भारतको राजस्थान प्रान्तको जोधपुर जिल्लाको सानो गाउँ खरंटियामा भएको थियो । उहाँले यस अवतरणमा लुप्तप्राय: सम्पूर्ण प्राचीन विद्याहरूलाई पुनर्जीवित गरी आफ्ना जन्म जन्मान्तरदेखिका लाखौं, करोडौं शिष्यहरूलाई आफ्नो तपस्यांश प्रदान गर्दै प्राणगत सम्बन्ध स्थापित गर्नुभएको छ । आजको युगको मान्यताविपरीत अनेकौं बाधा, विरोधहरूलाई पार गर्दै, नदीको उल्टो प्रवाहमा हिंडदै एक्लो व्यक्तिले ऋषिकालको पुनर्स्थापना र नवयुग निर्माणको लागि आफ्नो जीवन नै समर्पित गर्नुभयो । उहाँले मन्त्र साधनाको जटिलता र क्लिष्टतालाई हटाएर युगअनुरूप सहज र सटीक रूपमा यो गूढ ज्ञान हामीलाई अनेकौं दीक्षा, शिविर, प्रवचनको माध्यमबाट दिनुभएको छ ।

## कार्यकर्ता तालिम सम्पन्न

सिद्धाश्रम शक्ति केन्द्र सद्गुरूदेवहरूको युग निर्माणको महान् योजनालाई मूर्तरूप दिने कार्यमा तन, मन, धनले लागि परिरहेको छ । युग निर्माणमा दत्तचित्त हुने कार्यमा सहभागी हुन विशिष्ट व्यक्तित्वको आवश्यकता पर्दछ। विशिष्ट ज्ञान, विशिष्ट खुबी र शुद्ध अन्तःकरण भएको व्यक्तित्वहरू नै युग निर्माणका लागि बलिया खम्बा हुन सक्दछन् । यसैलाई हृदयंगम गरी संस्थाले हरेक महिना आफ्ना कार्यकर्ताहरूलाई परिमार्जन गरिरहेको छ तालिम तथा प्रशिक्षणको माध्यमबाट । गत असारको २१ र २१ गते पनि कार्यकर्ता सहायक समूह क र ख का लागि तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न भयो । बिहान ६:३० देखि ११ बजेबाट कार्यकर्ता सहायक समूह कको बाह्रौँ र बिहान ११:३० बाट बेलुकी ५ बजेसम्म कार्यकर्ता सहायक समूह ख को दशौँ तालिम तथा प्रशिक्षण कार्यक्रम काठमाडौँ कमलपोखरीमा रहेको अग्रवाल भवनमा सम्पन्न भएको थियो ।

स्तुति वन्दनाबाट शुरू भएको उक्त तालिम तथा प्रशिक्षण कार्यक्रममा प्रशिक्षार्थीहरूलाई भक्तिसंगीत, पूजा र हवन, सिद्धाश्रम शक्ति केन्द्रको भावी योजना आदि विषयमा प्रशिक्षण दिइएको थियो। उक्त कार्यक्रममा सम्पन्न पूजनमा निशा ढकाल, सृजना बस्नेत, राज्यलक्ष्मी बस्नेत, लक्ष्मी कुँवर, जानुका के.सी., जयन्ती पुडासैनी, अम्बिका थापा, तारा गौतम, गोमती थापा, लक्ष्मी पाण्डे, रूपा अर्याल, पूर्णमाया पौडेल, सानुमैयाँ नापित, मधुकुमारी रायमाझी तथा भाष्कर गम्भीर सिंह रायमाझीले गुरू पादुकाको दिव्य पूजन गर्ने सौभाग्य पाउनुभएको थियो। कार्यक्रममा कार्यकर्ताहरूको ग्रेडिङ्ग पनि सुनाइएको थियो ।

## दिव्य गुरू महोत्सव

परमपूज्य सद्गुरूदेव डा. नारायणदत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) को अवतरण भएको शुभ २१ तारीखको पावन अवसर पारेर सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिना दिव्य गुरू महोत्सवको आयोजना आफ्नो स्थापना कालदेखि नै गर्दै आइरहेको छ । यसैक्रमलाई भव्य एवं दिव्यरूपमा निरन्तरता दिने क्रममा गत आषाढ महिनाको ७ गते तदनुसार २१ जुन २०१० का दिन बसुन्धरामा रहेको आश्रम परिसरमा उक्त कार्यक्रम सम्पन्न भयो ।

कार्यक्रम बिहान १०:१५ मा प्रार्थनाबाट शुभारम्भ भएको थियो । प्रार्थनापछि निखिल स्तवन, गोरक्ष स्तवनको सामूहिक सस्वर पाठ गरिएको थियो । त्यसपछि गुरू पादुका पूजन, गुरूमन्त्र जप, हवन, आह्वान भजन, आरतीको क्रम रहेका थियो । कार्यक्रममा गुरू पूजनको सौभाग्य साधिका मुना घलेले प्राप्त गर्नुभएको थियो । आरतीपछि स्वागत, भजन कीर्तन, नृत्य, प्रवचन, पुरस्कार वितरण आदि क्रमहरू रहेका थिए । कार्यक्रममा उपस्थित सम्पूर्णलाई मन्तव्यको माध्यमबाट साधिका सुनिता रेग्मीले स्वागत गर्नुभएको थियो । प्रवचनको क्रममा सावरपन्थी साधक रामजी अर्यालले गुरू प्राप्ति गर्न र गुरू मार्ग अबलम्बन गर्न जोड दिदैँ हालै सम्पन्न सवालाख रोट महोत्सवको आय तथा व्ययको विवरण प्रस्तुत गर्नुभएको थियो ।

कार्यक्रममा गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको तर्फबाट नृत्य तथा भजन प्रस्तुत गरिएको थियो। गोरक्ष निखिल वाणी मासिकको सदस्यता वृद्धि गर्ने साधक साधिकाहरूलाई सोही कार्यक्रममा पुरस्कार स्वरूप विशेष धारण माला तथा अन्य उपहार वितरण गरिएको थियो । अपराह्न ३:३० बजे कार्यक्रमको औपचारिक समापन गरिएको थियो ।

## सुकुटेले मनायो दोस्रो वार्षिकोत्सव

सिन्धुपाल्चोक जिल्लाको सुकुटेमा रहेको सिद्धाश्रम शक्ति केन्द्रको आरती सञ्चालन केन्द्रले गत आषाढ २८ गते सोमबार आफ्नो दोस्रो वार्षिकोत्सव सद्गुरूदेवहरूको स्तुति वन्दना, भजनकीर्तन, प्रसाद वितरण आदिका साथ मनायो । कार्यक्रम बिहान ११ बजेदेखि अपराह्न ४ बजे आश्रम परिसरमा सम्पन्न भएको थियो ।

श्री गुरु चरणकमलेभ्यो नमः

एउटा नदी बग्दै बग्दै अघि बढिरहेको हुन्छ। यसरी अघि बढ्ने क्रममा बाटो असमान हुन्छ। कहीँ समतर फाँट हुन्छ, जसमा नदी धेरै फैलिएर अघि बढ्छ, कहीँ खोंच हुन्छ, जहाँ नदी साँघुरिएर अघि बढ्छ। कहीँ ठूलठूला चट्टानहरु आउँछन्, जहाँ नदीलाई अघि बढ्न नै मुश्किल पर्छ। त्यस्तो अवस्थामा पनि नदीको यात्रा रोकिँदैन र नदीले हर हालतमा चट्टानलाई छिचोलेर अघि बढ्छ। कहीँ घुम्ती आउँछ त कहीँ दोभान। तर पनि हर हालतमा, हर परिवेशमा नदीको यात्रा अघि बढिरहेको हुन्छ अविरल, अविचलित। नदीको यात्राको गन्तव्य हो– सागर। नदी हर अनुकूलता प्रतिकूलतामा अघि बढ्दै अन्तमा सागरमा गएर मिल्दछ र त्यो नदी एउटा सामान्य नदीबाट विशाल समुन्द्र बन्दछ, समुन्द्र देवता कहलिन्छ।

एउटा नदीजस्तै सिद्धाश्रम शक्ति केन्द्र पनि आफ्नो गन्तव्यमा अघि बढिरहेको छ, गन्तव्य हो– गोरक्ष निखिल युग। युग परिवर्तन अवश्य नै कुनै सामान्य घटना होइन। व्यक्ति, घर, परिवार, टोल, समाजबाट राष्ट्र हुँदै सम्पूर्ण विश्वमा नै परिवर्तन गर्ने यो अभियान धेरै नै चुनौतिपूर्ण छ। यसकारण नै सिद्धाश्रम शक्ति केन्द्रको यात्रामा पनि अनुकूलता प्रतिकूलताका स्थितिहरु स्थापनाकालदेखि नै आइरहेका छन्। प्रत्येक प्रतिकूलतामा सिद्धाश्रम शक्ति केन्द्र अझ बलवान् भएर अघि बढेको छ र यसको यात्रा अझ सशक्त बनेको छ। जुनसुकै परिवेशमा पनि सिद्धाश्रम शक्ति केन्द्रको यात्रा गौरवशालीरुपमा अघि बढिरहेको छ अविरल, अविचलित।

यो सबै केवल एउटै कारण भइरहेको छ कि सिद्धाश्रम शक्ति केन्द्र कुनै सामान्य संस्था होइन। परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ र परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरुरुपमा धारण गरेर अघि बढिरहेको यो संस्था स्वयंमा अद्वितीय छ। यो संस्थाको जन्म नै सद्गुरुदेवहरुबाट भएको छ एउटा महान् उद्देश्य पूर्तिको लागि। यो संस्था र अझ भनौं यो आश्रम सम्पूर्णरुपमा सद्गुरुदेवहरुको नै हो र यसको बागडोर पनि उहाँहरुको हातमा नै छ। यसकारण नै सिद्धाश्रम शक्ति केन्द्र यति सशक्त छ कि यसलाई बिगार्ने, भत्काउने तत्त्वहरु र यसको यात्रालाई रोक्न खोज्ने उपायहरुले सधैं नै पराजयको सामना गर्नुपरेको छ।

विरोध, बाधाहरुका साथै सिद्धाश्रम शक्ति केन्द्रले धेरै माया र सहयोग पाएको छ। शुरुका दिनदेखि अहिलेसम्म हजारौं, लाखौं व्यक्तिहरुले संस्थालाई सहयोग गर्नुभएको छ र उहाँहरुको योगदान, त्यागको बलमा यो यात्रा सशक्तरुपमा अघि बढिरहेको छ। तसर्थ, शुरुदेखि अहिलेसम्म आश्रमलाई सहयोग गर्ने प्रत्येक व्यक्तिप्रति संस्था कृतज्ञीभाव राख्दछ।

सिद्धाश्रम शक्ति केन्द्र सबैको हो किनकि यो सद्गुरुदेवहरुको हो। सिद्धाश्रम शक्ति केन्द्र उनीहरुको हो जो आश्रमसँग आबद्ध छन्, यो उनीहरुको पनि हो जसले संस्थाको नाम नै सुनेका छैनन्। यो संस्था प्रत्येक मानवको आफ्नो संस्था हो र प्रत्येक मानवको हितको लागि नै यो संस्था निरन्तररुपमा अघि बढिरहेको छ एउटा नदीसरी आफ्नो गन्तव्य गोरक्ष निखिल युगतर्फ जहाँ शीतलता छ, शान्ति छ, अनि आनन्द छ।

जय गुरुदेव !

कार्यकर्ता सहायक समूह कबाट आध्यात्मिक उप-नेतृत्वकर्ता तहमा पदोन्नत

कार्यकर्ता सहायक समूह खबाट क समूहमा पदोन्नत

१-१०: गत महिनाको २० र २१ गते सञ्चालित कार्यकर्ता सहायक समूह क र ख को तालिम तथा प्रशिक्षण कार्यक्रम।

११: सिन्धुपाल्चोक जिल्लामा रहेको सुकुटे आरती सञ्चालन केन्द्रको दोस्रो वार्षिकोत्सवको अवसरमा आयोजित कार्यक्रम।

।। ॐ नमो गुरु मछिन्द्र, शब्द साँचा
पिण्ड काचा मेरा भक्ति, गुरुका शक्ति
नवनाथै जगाऊँ, चौरासीनाथै जगाऊँ
फुरो मंत्र ईश्वरो गुरु गोरख वाचा ।।

गो. हु. का. द. नं. ९/०६०/६१
का. जि. द. नं. ७०/०५६

**दुर्लभ ग्रन्थहरूको अध्ययन गरौं ।**
**मानव जीवनलाई धन्य बनाऔं ।।**